# अर्चिरादिमार्गः

प्रकाशक—
श्रीगदाधर आचार्य
रंगनाथ मन्दिर मण्डकोट,
खोपासी।

अनुवादक—
श्री श्रीनिवास आचार्य
घट्टेकुलो मैतिदेवी,
डिल्लीबजार,
काठमाण्डू, नेपाल।

२०३० साल फागुन ७ गते सोमवार

मुद्रक—
नेपाल प्रेस,
शुक्रपथ ६/५६८,
काठमाडौं।
[ फोन नं. ११०१२ ]

प्रथम संस्करण १००० प्रति

मूल्य रु. २।-

## शुद्धिपत्र

| पेज नं. | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|
| १ | १४ | त्रिपादविभूति | त्रिपादविभूति |
| २ | १ | यमैकातपत्र | यथैकातपत्रा |
| ३ | १६ | नारदऋपि | नारदऋषिले |
| ४ | ८ | मृहीत्वा | गृहीत्वा |
| ५ | १८ | महिना | महिला |
| ७ | २२ | प्रारङ्गिक | प्रासङ्गिक |
| ६ | २ | इतः परमपि | इतः परमपि |
| ६ | ७ | लोकस्भाव | लोकस्वभावः |
| १० | ३ | संचारङ्घ्रिः | संचचारङ्घ्रिः |
| ११ | ४ | द्रष्टुं | द्रष्टुं |
| १२ | ३ | इत्यप्रेचय | इत्यपेक्ष्य |
| १२ | ५ | कारिन्स्तवया | कारितस्त्वया |
| १३ | १७ | अरहर | अहरहः |
| १३ | २१ | पारतन्न्य | पारतन्त्य |
| १४ | १० | शरपति | शरणागति |
| १५ | १६ | कृष्णमां | कृष्णा मां |
| १६ | ११ | मस्तकस्य च | मस्तकस्य मुखस्य च |
| ३३ | ३ | इत्पुक्त | इत्युक्त |
| ६१ | १४ | मानिहरुका | मानिसहरूका |
| ६६ | १२ | दयासागमा | दयासागरमा |
| ७१ | १३ | कृपरपात्र | कृपापात्र |

## भूमिका

श्रीरामानुजसम्प्रदायका उत्तरकला र दक्षिणकला भन्ने दुई विभाग छन् । यी दुई विभाग तमिलभाषामा वडगलै र तेङ्गलै नामले प्रसिद्ध छन् । अर्चिरादिमार्गः ग्रन्थको प्रणेता त्रिकालस्मरणीय श्रीलोकाचार्यस्वामी तेङ्गलै सम्प्रदायको आचार्य हुनुहुन्थ्यो । वहाँ वडगलै सम्प्रदायको आचार्य श्रीवेदान्तदेशिकस्वामीको समसामयिक हुनुहुन्थ्यो । श्रीरङ्गम् उहाँको जन्मस्थान हो र उहाँले श्रीरङ्गभूमै बसेर श्रीरङ्गनाथ भगवानको अन्तरङ्गकैङ्कर्य गरेर जीवन व्यतीत गर्नु भयो । गवेषणागर्दा जानिन्छ कि श्रीनाथमुनिस्वामीदेखि लोकाचार्यस्वामीसम्म सबै आचार्यहरू तेङ्गलै संप्रदायका हुनुहुन्थ्यो । श्रीवेदान्तदेशिकस्वामीले आफ्नो विद्वत्ताद्वारा वडगलै सम्प्रदाय भन्ने नवीन सम्प्रदायको सृष्टि गर्नु भयो । श्रीलोकाचार्यस्वामीले वैष्णवसिद्धान्त अनुसार अठारग्रन्थहरू लेख्नुभयो । यी ग्रन्थहरू अष्टादश रहस्य नामले प्रसिद्ध भए । अर्चिरादिमार्गः ती अष्टादश रहस्यग्रन्थहरूमध्ये अन्यतम ग्रन्थ हो । श्रीलोकाचार्यस्वामीले लेख्नु भएको प्रत्येक ग्रन्थ उहाँको अद्भुत रचनाशैली, अत्युच्चकोटिको ज्ञान, अत्याश्चर्य

भगवत्प्रेम तथा शास्त्रीय रहस्यहरूको विशदीकरणशक्तिको परिचायक हो । उहाँ वैराग्यले विवाह नगरेर नैष्ठिक ब्रह्मचारी नै रहनुभयो । श्रीलोकाचार्यस्वामी र श्रीवेदान्तदेशिकस्वामी दुवै महापुरुष हुनाले उहाँहरूको परस्परमा अत्यन्त प्रेम थियो, तापनि मतानैक्यको कारण दुईजनाको शास्त्रीय वादविवाद श्रीरङ्गम्मा भईरहन्थ्यो । जीवप्रति भगवानको कृपा अहैतुकी हो तिङ्कलै सम्प्रदायको यही हो मुख्य सिद्धान्त । श्रीलोकाचार्यस्वामीले अकाट्य युक्ति र प्रमाण दिएर यो विषय श्रीवचनभूषण भन्ने ग्रन्थमा सिद्ध गर्नु भयो ।

शङ्कराचार्यको मतमा ब्रह्मबाहेक सब मिथ्या हुनाले ब्रह्मनै मिथ्या अविद्याग्रस्त भएर जीव हुनुभएको छ । त्यस कारण अविद्यानाश भए जीव ब्रह्म भइहाल्दछ । अतः जीवको अविद्यानाश र ब्रह्मभाव प्राप्ति नै मुक्ति हो तथा जीवभाव प्राप्तिनै ब्रह्मको बद्धावस्था हो । संसारबन्धन, बन्धनबाट मुक्त हुनु, मुक्तिप्राप्तिको निमित्त ज्ञान, भक्ति, शरणागति, गुरु–शिष्य सम्बन्ध इत्यादि यी सबै ब्रह्मदेखि अतिरिक्त हुनाले मिथ्या हुन् । अविद्या नाशभए पछि मुक्तजीवले कहीं जानु पर्दैन । ब्रह्म सर्वव्यापक विभु हुनाले मृत्यु भएपछि ब्रह्मभाव प्राप्त गरेको मुक्तजीव त्यहीं रहन्छ ।

किन्तु वैष्णव मतमा राम, कृष्ण प्रभृति नामले प्रसिद्ध विष्णुनै परब्रह्म, परमात्मा, परमेश्वर इत्यादि शब्दवाच्य परतत्त्व हुनुहुन्छ । किनकि ब्रह्मका सबै लक्षणहरू केवल



विष्णुमा पाइन्छन्, अरू कुनै देवतामा पाइँदैनन् । यस विषयका अत्यन्त असंख्य प्रमाणहरू वेद, उपनिषद्, इतिहास, पुराण र पाञ्चरात्र आदि शास्त्रहरूमा छन् । ध्यान, अर्चना, कीर्तन, प्रणाम आदि उपासनाद्वारा विष्णुको प्रसन्नताले मुक्ति पाइन्छ । वैकुण्ठ, परमपद, त्रिपादविभूति परमव्योम, परमाकाश इत्यादि नामले प्रसिद्ध विष्णुको अप्राकृत नित्यधाम नै मुक्तजीवहरूको गन्तव्यस्थान हो । मुक्त भई वैकुण्ठ जाने मार्गको नाम अर्चिरादिमार्ग वा देवयानमार्ग हो । वैकुण्ठलोकको विस्तृत आभ्यन्तरिक वर्णन पद्मपुराण, पाञ्चरात्र आदि शास्त्रग्रन्थहरूमा छ । वैकुण्ठ र अर्चिरादिमार्गको शास्त्रीयवर्णनद्वारा नै शाङ्करमतको खण्डन भइहाल्दछ । किनकि शाङ्करमतानुसार ब्रह्मत्व प्राप्त मुक्तजीव सर्व व्यापक हुनाले वहाँले कहीं जानु पर्दैन र जान सक्नुहुन्न । त्यस कारण वैकुण्ठ र अर्चिरादिमार्गको वर्णन मिथ्या र निष्प्रयोजन भइहाल्दछ । मिथ्या विषयको विस्तृत वर्णन दिएर भ्रम बढाउनु माता–पिताभन्दा सहस्रगुण वत्सल शास्त्रको कार्य नै होइन ।

अर्चिरादिमार्गको बाटो गरी वैकुण्ठ गएर त्यहाँ परब्रह्म वैकुण्ठनाथ नारायणको दर्शन र उहाँको अनन्त दिव्य गुणावलीको अनुभव गर्दै असीम प्रेमले प्रेरित भई अनन्तकाल पर्यन्त उहाँको सेवा गरेर तज्जनीत आनन्दरूपी, अमृतसागरमा निमग्न रहनुनै यथार्थ मोक्ष हो । 'नचपुनरावर्तते नचपुनरावर्तते' वेदान्तमा कथित श्रीवेदव्यासको यमउक्ति अनुसार यस्तो

मोक्ष पाउनु भएको जीव कुनै कालमा फेरि संसारबन्धनमा बद्ध हुनुहुन्न । मोक्ष पाएर पनि ब्रह्मको दास भएर उहाँको सेवा गर्नु पर्‍यो भने– त्यस्तो मोक्षबाट के लाभ हुनेछ भन्ने शङ्का निराधार छ। किनकि संसारमा देखिन्छ कि प्रिय व्यक्तिको सेवामा लज्जा हुँदैन र दैहिक कष्टलाई कष्ट संम्झिदैन बरु सेवकलाई आनन्द नै हुन्छ। जीवात्मा ब्रह्मको स्वाभाविक दास हो, मुक्तावस्थामा पनि जीव ब्रह्म हुँदैन किन्तु जीवनै रहन्छ। यो शास्त्रको कथन हो यथा 'दासभूताः स्वतः सर्वे ह्यात्मानपरमात्मनः। नान्यथालक्षणं तेषां बन्धे मोक्षे तथैव च'॥ जीवात्माहरू परमात्माको स्वतः दास हुन्। बद्धावस्था र मुक्तावस्थामा जीवात्माहरूको ब्रह्मदासत्व बाहेक अर्को लक्षण छैन। (पाँचरात्र) श्रीलोकाचार्यस्वामीले अत्यन्त साहित्यिक शैलीले यो ग्रन्थ लेख्नु भयो। यो ग्रन्थ आद्योपान्त भक्तिरसले पूर्ण छ। प्रमाण परतन्त्र, निर्मत्सर पाठकवर्गको जानकारिको निमित्त वैकुण्ठको अलिकति शास्त्रीय प्रमाणहरूको यहाँ सन्निवेश गर्ने इच्छा भयो।

तद्विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः दिवीव चक्षुराततम्। विष्णुको त्यस प्रसिद्ध परमपदलाई त्यहाँ रहने सूरिहरू अर्थात् विष्णु पार्षदहरू ठूला आँखाले आकाशलाई हेर्नु जस्तै दर्शन गर्नुहुन्छ। (ऋग्वेद)

विज्ञान सारथिर्यस्य मनः प्रग्रहवान् नरः।
सोऽध्वनः पारमाप्नोतितद्विष्णोः परमंपदं॥ (कठोपनिषद)



विज्ञान जसको सारथी र मन लगाम हो उनै ज्ञानी व्यक्ति संसारमण्डलको सीमाबाहिर विष्णुको परमपदमा जानुहुन्छ।

क्षयन्तमस्य रजसः पराके (ऋग्वेद) प्रकृतिमण्डल बाहिर (वैकुण्ठमा) राज हुने (परब्रह्मलाई)।

श्रीकृष्ण भगवान वैकुण्ठ सवारी हुँदा ब्रह्मादि– देवताहरूको स्तुतिः—

दिव्यं स्थानमजरमप्रमेयं, दुर्विज्ञेयं चागमैर्गम्यमाद्यम्।
गच्छप्रभो रक्षचास्मान् प्रपन्नान् कल्पेकल्पे जायमानःस्वमूर्त्या॥
(महाभारत)

हे प्रभु! आफ्नो जरारहित, अप्रमेयं, दुर्विज्ञेय, शास्त्रद्वारा जानिने प्रलयकालमा पनि रहने त्यस्तो दिव्य स्थानमा सवारी होइबक्स्योस् र हरेक कल्पमा पस्तै अप्राकृत रूपधारण गरेर संसारमा आई,हामीहरूको रक्षा गरिबक्स्योस्।

विवेश वैष्णवं धाम शशरीरः सहानुगः (वा. रामायण) श्रीरामचन्द्र भगवान आफ्ना साथमा आएका अयोध्यावासी सबै जीवहरू र आफ्नो दिव्य शरीर लिएर विष्णुको धाममा प्रवेश गरिबक्स्यो।

सत्यं ज्ञानमनन्तं ब्रह्म यो वेदनिहितं गुहायां परमे व्योमन् (तै. उपनिषद)। सबैका हृदयरूपी गुफामा र परमाकाश

( वैकुण्ठ ) मा राज हुने परब्रह्म, सत्यस्वरूप, ज्ञानस्वरूप र अनन्त होइबक्सिन्छ ।

यद्गत्वानिवर्तन्ते तद्धाम परमंमम ( गीता ) जहाँ गएर फेरि संसारमा जन्मनु पर्दैन त्यो हो मेरो परमधाम ॥

म ठूलो भक्त अथवा विद्वान् होइन। मेरो मातृभाषा पनि नेपाली होइन, त्यस कारण सहृदय पाठकवर्गले अनुवादको भाषाको शुध्य–शुद्धितिर्ह ध्यान नदिएर विषयतिर्ह ध्यान दिएर ग्रन्थको आदर गर्नुभयो भने म आफ्नू परिश्रम सफल भयो भनी संभने छु ।

पट्टेकुलो मैतीदेवी काठमाण्डू निवासी श्रीशंकरलाल सेक्सन अफिसरज्यूले अवसर नभएतापनि संशोधन गर्नु भयो यसमा म वहाँप्रति चिरकृतज्ञ छु ।

खोपासी नामक ग्रामस्थ रंगमन्दिरको प्रतिष्ठाता श्रीमान् गदाधराचार्यले यो ग्रन्थ प्रकाशित गर्नु भएकोमा वहाँ सम्पूर्ण वैष्णव समाजको धन्यवादको पात्र हुनुहुन्छ ।

वागदेव निजगढ निवासी श्रीरामप्रपन्न शास्त्रीले कृपा गरी प्रूफ संशोधनको लागी आफ्नो अमूल्य समय लगाउनु भएकोले वहाँलाई पनि मेरो हार्दिक धन्यवाद छ ।

इति

—गुरु कृपाप्रार्थी
श्री श्रीनिवासाचार्य

श्रीमतेरामानुजाय नमः ।



# भाषाटीकायुतः प्रमेयशेखरः

लोकाचार्याय गुरवे कृष्णपादस्य सूनवे ॥
संसारभोगिसंदष्टजीवजीवातवे नमः ॥ १ ॥

मूल — निर्हेतुकभगवत्कटाक्षद्वारा अज्ञातसुकृतं भवति। तद्द्वारा अद्वेषो भवति। तस्माद्भगवद्भागवतविषयेष्वाभिमुख्यं भवति। आभिमुख्यभवनान्तरमेव त्याज्योपादेयविभा-

---

अनु— भगवानको निर्हेतुक शुभकटाक्ष भएपछि जीवले अज्ञातसुकृत भन्ने कर्म गर्दछ। अज्ञातसुकृतद्वारा जीवको अद्वेष भन्ने अवस्था उत्पन्न हुन्छ। अद्वेषबाट भगवान र भागवतहरूका विषयमा आभिमुख्य नामक अवस्था उत्पन्न हुन्छ। यसपछि त्याज्य र उपादेयलाई छुट्याएर जान्न कौतुहल हुन्छ। त्यसपछि सात्विकहरू-संग संभाषण गर्दछ। यसको फलले सदाचार्यको

मूल— गज्ञाने कौतुकं भवति । तेन सात्त्विकसंभाषणं भवति । तेन सदाचार्यसमाश्रयणं भवति । तद्भवनमात्र एव त्याज्योपादेयनिश्चयो भवति । तद्भवनमात्र एव प्राप्यान्तरेषु वैराग्यं परमप्राप्ये अभिनिवेशश्च भवति । अनन्तरं प्राप्यान्तरनिवृत्तेः परमप्राप्यसिद्धेश्च हेतुतया सिद्धोपायस्वीकारो भवति । अनन्तरं भगवत्प्राप्तिविषये त्वरा भवति । अनन्तरम् 'अहं स्मरामि' इत्युक्तप्रकारेण

---

अनु— चरण आश्रय लिइन्छ । तबमात्र त्याज्य र उपादेय विषयहरूको निश्चय हुन्छ । यो निश्चय भएपछि मात्र सबै प्राप्यान्तरहरूमा वैराग्य र परमप्राप्य भगवानमा अभिनिवेश ( तन्मयता ) हुन्छ । त्यसपछि प्राप्यान्तरहरूको निवृत्ति र परम प्राप्तिको सिद्धिको हेतु सिद्धोपायलाई स्वीकार गरिन्छ । तदनन्तर भगवत्प्राप्तिका लागि आतुरता हुन्छ । र 'अहं स्मरामि' भगवानको यस कथनानुसार उनै जीव भगवानको स्मरणको पात्र हुनुहुन्छ । त्यसपछि उनै जीवको आत्माले भूतसूक्ष्मले बनेको सूक्ष्मशरीर प्राप्त गर्दछन् । त्यसपछि त्यै सूक्ष्मशरीरमा रहेर उनै जीवात्माको परमात्मासंग संसर्ग हुन्छ अर्थात् पिता–पुत्रको मिलन जस्तै जीव भगवानसंग मिल्दछन् । अनन्तर हृदयवासी भगवानको कृपाले मार्गविशेष प्रकाशमान हुन्छ । त्यसपछि



मूल— ईश्वरस्मृतिविषयो भवति । अनन्तरं भूतसूक्ष्मशरीरपरिष्वङ्गो भवति । अनन्तरं परमात्मसंसर्गो भवति । पश्चात् हार्दानुग्रहेण मार्गविशेषप्रकाशो भवति । तत हृदयगुहानिर्गमनं भवति । ततः मूर्धन्यनाड्या निष्क्रमणं भवति । ततः अर्चिरादिमार्गगमनं भवति । ततः आतिवाहिकसत्कारो भवति । ततः आवरणातिक्रमो भवति । ततः प्रकृत्यतिलङ्घनं भवति । ततोविरजास्नानं भवति ।

---

अनु— हृदयगुहा भन्ने बस्ने स्थानबाट आत्मा निस्केर सुषुम्णानाडीको बाटो गरी शरीरबाट निस्कनु हुन्छ । त्यसपछि अर्चिरादिमार्गको बाटो जानु हुन्छ । त्यसपछि आतिवाहिक भन्ने देवताहरू उनै जीवात्माको सत्कार गर्नु हुन्छ । त्यसपछि उनै जीवले ब्रह्माण्डको सातवटा आवरणहरू अतिक्रमण गर्नु हुन्छ । त्यसपछि मूल प्रकृतिलाई नाघ्नु हुन्छ । अनन्तर विरजानदीमा स्नान गर्नु हुन्छ । त्यसपछि प्राकृत सूक्ष्मशरीर नाशभइहान्दछ । अनन्तर अपहतपाप्मत्व इत्यादि गुण समूहको प्रादुर्भाव हुन्छ । अनन्तर अमानव भन्ने भगवानको करस्पर्श हुन्छ । त्यसपछि भगवत्सङ्कल्पले कल्पित दिव्यदेहको प्राप्ति हुन्छ । अनन्तर जहाँ कालको प्रभुता छैन त्यस्तो वैकुण्ठ भन्ने दिव्यदेशमा जीव पुग्नुहुन्छ । त्यसपछि आरंह्रद भन्ने पोखरीको तटमा

मूल – ततः सूक्ष्मशरीरविश्लेषो भवति। ततोऽपहतपाप्मत्वादिगुणगणप्रादुर्भावो भवति। अनन्तरममानवकरस्पर्शो भवति। अनन्तरं भगवत्सङ्कल्पकल्पितदिव्यदेहप्राप्तिर्भवति। ततः अकालकाल्यदिव्यदेशप्राप्तिर्भवति। ततः आरंहदतटस्नानं भवति। पश्चाद्दिव्यालङ्कारो भवति। ततः दिव्यविमानारोहणं भवति। ततः तिल्यकान्तारप्रवेशो भवति। ततः दिव्याप्सरः सत्कारो भवति।

---

अनु— स्नान गर्नु हुन्छ। त्यसपछि भगवानका परिचारिकाहरू उहाँलाई दिव्य अलङ्कारले अलंकृत गर्नु हुन्छ। अनन्तर उनै मुक्तजीव दिव्यविमानमा आरोहण गर्नु हुन्छ। त्यसपछि उहाँ तिल्यकान्तार भन्ने स्थानमा प्रवेश गर्नु हुन्छ। त्यसपछि दिव्यअप्सराहरू उहाँको सत्कार गर्नुहुन्छ। त्यसपछि उहाँ तिल्यगन्धमा प्रवेश गर्नु हुन्छ। अनन्तर उहाँ ब्रह्मगन्धमा प्रवेश गर्नु हुन्छ। त्यसपछि अप्राकृत गोपुरमा पुग्नुहुन्छ। अनन्तर दिव्यनगरमा पूवेश गर्नु हुन्छ। त्यसपछि पार्षदहरूका परिषद् उहाँको पूत्युद्गमन गर्नु हुन्छ (सत्कारपूर्वक लिन आउनु हुन्छ)। अनन्तर उहाँ राजमार्गमा सवारी हुन्छ। त्यसपछि उहाँ ब्रह्मतेजमा पूवेश गर्नु हुन्छ। अनन्तर उहाँ दिव्यगोपुरमा पुग्नुहुन्छ। अनन्तर ब्रह्मवेश्ममा पूवेश गर्नु हुन्छ। त्यसपछि



मूल -- ततस्तिल्यगन्ध प्रवेशो भवति। ततो ब्रह्मगन्ध प्रवेशो भवति। ततोऽप्राकृतगोपुर प्राप्तिर्भवति। ततो दिव्यनगरप्राप्तिर्भवति। ततः सूरिपरिषत्प्रत्युद्गमनं भवति। अनन्तरं राजमार्गगमनं भवति। ततो ब्रह्मतेजःप्रवेशो भवति। अनन्तरं दिव्यगोपुरप्राप्तिर्भवति। ततो ब्रह्मवेश्मप्रवेशो भवति। ततो दिव्यमण्डपप्राप्तिर्भवति। ततो दिव्यपार्षद्प्राप्तिर्भवति। ततः सपत्नीकसर्वेश्वरदर्शनं भवति। ततः स्तुतिप्रणामाञ्जलिप्रमुखसंभ्रमानुवर्तनं भवति। ततः परमात्मसमीपप्राप्तिर्भवति। ततः पादपीठपर्यङ्कारोहणं भवति। ततो भगवदुत्संगसङ्गो भवति। ततः आलोकनालापाद्यनुभवो भवति। ततः

---

अनु— दिव्यमण्डपमा पुग्नुहुन्छ। त्यसपछि दिव्यपार्षदहरूकाहाँ पुग्नुहुन्छ। अनन्तर दिव्यमहिषीहरूसमेत सर्वेश्वरको दर्शन हुन्छ। त्यसपछि स्तुति, पूणाम, हात जोड्नु इत्यादि अनुवर्तमा व्यग्रता हुन्छ। त्यसपछि उनै मुक्तजीव परमात्मा वैकुण्ठनाथको समीपमा जानु हुन्छ। अनन्तर उहाँ भगवानको पादपीठ र सिंहासनमा उक्लनु हुन्छ। त्यसपछि उहाँ भगवानको काखमा बस्नुहुन्छ। त्यसपछि भगवानको दर्शन र वहाँसंग बातचीत गर्नु इत्यादि अनुभव हुन्छ। त्यसपछि भगवानले उहाँलाई अङ्कमाल गरेर अङ्कमालको अनुभव

मूल— आलिङ्गनाद्यनुभवो भवति। ततः स्वरूपरूपगुणविग्रहाद्यनुभवो भवति। ततः अनुभवजनितप्रीतिप्रकर्षो भवति। ततो नानाविधविग्रहपरिग्रहो भवति। ततः सर्वदेशसर्वकालसर्वावस्थोचितसर्वप्रकारकैङ्कर्यं भवति।

❀ इति श्रीलोकाचार्यविरचितः प्रमेयशेखरः ❀

---

अनु— दीबक्सिन्छ। अनन्तर भगवानले वहाँलाई आफ्नो निराकार स्वरूप, द्विभुज, चतुर्भुज इत्यादि रूपहरू तथा दिव्यगुणहरूको अनुभव दी बक्सिन्छ। ती अनुभवबाट असीम प्रेम उत्पन्न हुन्छ। तदनन्तर कैङ्कर्यको उपयोगी नानाप्रकारका शरीर धारण गरेर उनै मुक्तजीव त्यै असीम प्रेमले प्रेरित भई सर्वदेश, सर्वकाल र सर्वावस्थाको योग्य सर्वप्रकार कैङ्कर्य गर्नु हुन्छ।

❀ इति श्रीलोकाचार्यकृत प्रमेयशेखरको भाषानुवाद सम्पूर्ण ❀

श्रीमते रामानुजाय नमः

श्रीवानाद्रियोगिने नमः

# श्रीलोकसारङ्गमहामुनये नमः

# अर्चिरादिमार्गः

## प्रथमप्रकरणम्

मूल— श्रियः पत्युः सर्वेश्वरस्य विभूतिद्वयमपि शेषभूतं भवति। तत्र भोगविभूतौ वर्तमानाः 'कान्तिमरकटकवती श्रीपुत्री त्वं चोपरि संचरथः' इत्युक्तप्रकारेण तस्य भगवतः

---

अनु— श्रियः पति सर्वेश्वरको भोगविभूति र लीलाविभूति भन्ने दुवै विभूतिहरु वहाँको शेषवस्तु हुन्। यी दुई

---

टिप्पणी— वेद उपनिषद इत्यादि हिन्दुशास्त्र विचार गर्दा जानिन्छ कि शास्त्रले सम्पूर्ण विश्वलाई दुई प्रधान भागमा विभक्त गरेको छ। एउटा भाग भगवानको वैकुण्ठ, परमपद, त्रिपाद विभूति इत्यादि नामले प्रसिद्ध दिव्यधाम हो। यहाँ परब्रह्म वैकुण्ठनाथ नारायण आफ्नो श्रीदेवी, भूदेवी, नीलादेवी प्रभृति असंख्य महिषीवर्ग तथा परिजन र चारिकाहरूसंग आनन्द गरी बक्सिन्छ। त्यसकारण यसलाई भोग विभूति भन्दछन्। यस लोकको सृष्टि र संहार नहुने हुनाले यसको नित्य विभूति भन्ने नाम पनि छ। माथिल्लो भागमा र वरिपरि यो लोक सीमारहित छ। तल्लो भागमा

मूल — आश्रैव पभेकातात्रात्र्यास्तथा तस्य भगवतोऽभिमानेऽन्तर्भूता भवन्ति । लीलाविभूतौवर्तमास्तत्र वर्तमाना इव छन्दानुवर्तिनो न भवन्ति ।

अनु— विभूतिहरु मध्ये भोगविभूतिमा रहने नित्य*जीव र मुक्तजीवहरू वैकुण्ठनाथ भगवानको आज्ञा सर्वोपरी रहोस् त्यस कारण जुन विषयमा भगवानको जस्तो

टिप्पणी— विरजानदी भन्ने असीम जलराशि यसको सीमा हो । विरजानदीदेखि तल अनन्तकोटि ब्रह्माण्ड छन् । यी ब्रह्माण्डहरूका सृष्टि पालन र संहार भई रहन्छन् । भोगविभूति आद्यन्तहीन, कालकृत परिणामरहित र मुक्तजीवहरूको गन्तव्य स्थान हो । ब्रह्माण्डहरूमा भगवान बद्धजीवहरूको कर्मानुसार शासन गरी बक्सिन्छ । यो शासन वहाँको लीला हुनाले अनन्तकोटि ब्रह्माण्डहरू भगवानको लीला विभूति हुन् ।

*नित्यजीव–जीवात्माहरू तीन थरीका छन् यथा नित्य, मुक्त र वद्ध । अनादिकालदेखि कहिल्यै संसार बन्धनमा बद्ध नभएर वैकुण्ठमा रहेर भगवानको नित्य सेवा गरीरहने जीवात्माहरूको नाम नित्यजीव हो । भगवानको आदेश पाएर नित्यजीव कुनै विशेष कार्यको निमित्त संसारमा जन्मनु हुन्छ । त्यो कार्य सिद्धिए पछि शरीर छोडेर फेरि वैकुण्ठ गइ हाल्नुहुन्छ । अनादिकालदेखि संसारबद्ध भएता पनि संसार मुक्त भई वैकुण्ठमा नित्यजीवहरूसंग मिलेर भगवत्सेवा अनन्तकालसम्म गरीरहने जीवात्माहरू मुक्तजीव हुन् । मुक्तजीवलाई भगवान कहिल्यै संसारमा पठाइबक्सिन्न ।



मूल — किन्तु सङ्कल्पानुविधायिनःसन्तः 'नमःइत्येव वादिनः' इति स्थितिविपरीततया 'न नमेयम्' 'ईश्वरोऽहम्' इत्युक्तप्रकारेण स्वस्थाने वर्तमानाः अहम् मदीयमेव इति तिष्ठन्ति ।

अनु— अभिमत छ त्यस्तै चल्नु हुन्छ । लीलाविभूतिका बद्धजीवहरू अल्पज्ञ हुनाले भगवानको इच्छा थाहा पाउँदैनन् । अतः भगवान आफ्नो सङ्कल्पद्वारा यिनीहरूको परिचालन गरी बक्सिन्छ । यिनीहरू 'नमोनमः' यतिमात्र भनीरहनु हुन्छ' नित्यमुक्तजीवहरूको यस स्थितिको विपरीत भएर "म निहुरिने छैन'

टिप्पणी— १ नमोनमः यतिमात्र भनिरहनु हुन्छ— एक समय नारदऋषि श्वेतद्वीप गई वहाँले के देख्नु भयो भने त्यहाँ भगवत्पार्षदहरू भक्तिको पराकाष्ठाले शिरमा अञ्जलिबद्ध भएर नमोनमः यतिमात्र भनिरहनु हुन्छ । नमः–न–मः–म मेरो होइन– म स्वतन्त्र होइन–म भगवानको परतन्त्र दास हुँ नमःको यस अर्थ अनुसार नमः शब्दले जीवको पारतन्त्र्य भन्ने स्वरूपलाई जनाउँछ । पार्षदहरूले तदनुसार नमः शब्द उच्चारण गरी आफ्–आफना पारतन्त्र्य भगवानसंग विन्ति गरी रहनु हुन्थ्यो युधिष्ठिर कहाँ गएर नारदऋषि युधिष्ठिरलाई भन्नुभयो कि श्वेतद्वीपमा मैले भगवत्पार्षहरूको जो स्वभाव देखें त्यै हो मुक्तजीवहरूको लक्षण ।

२ म निहुरिने छैन यो रावणको वचन हो । रावणले भनेको थियो कि कसैले मलाई काटेर दुई टुक्रा पारोस् तापनि म रामचन्द्रको अगाडि निहुरिने छैन ।

मूल— ते सर्वे भगवद्व्यापारनिष्ठा अमरा वर्तन्ते । एते सर्वे तद्विपरीताः अन्यमेकं देवं स्तुवन्ति गायन्ति नृत्यन्ति । 'उत्कृष्टा वेदविमला' इत्युक्तप्रकारेण ते सर्वे इव उत्कृष्टा एते न भवन्ति । 'विस्मृतिशून्यज्ञानवन्तोऽमराः' इत्युक्तप्रकारेण ते सर्वे इव दिव्यज्ञानोपपन्ना एते न भवन्ति । ज्ञानरहिता भूत्वा ज्वालावत्तेजोज्योतिषो विपरीता मलिनदेहं परिगृह्यवर्तन्ते 'विपन्यवः' 'दिविषत्स्तुत्यं प्रधाननाथम्' इत्युक्तविपरीता विपरीतंमृहीत्वाऽस्तुवन्ति । 'तवैवदास्यंकुर्म' इत्युक्तप्रकारेण तस्य दास्य-

अनु— 'म ईश्वर हूं' रामायण र गीताका यी उक्ति अनुसार आफ्नै स्थानमा रहन्छन् अर्थात् म मेरै हूं म कसैको दास होइन भन्ने गर्व छोड्दैनन् । नित्यमुक्तजीवहरू भगवानकै सेवामा निष्ठावान अमरदेवता हुनुहुन्छ । बद्धजीवहरू वहाँहरूका विपरीत भएर अर्कै कुनै देवताको स्तुति गर्दछन्, उनै देवताको अगाडि गाउँछन् अथवा नाच्दछन । 'वेदज्ञानले श्रेष्ठ हुनु हुन्छ' यस उक्ति अनुसार बद्धजीवहरू नित्यमुक्तजीवहरु जस्तै दिव्यज्ञानवान होइनन् र तिनीहरू, यिनीहरू समान श्रेष्ठ पनि होइनन् । नित्यमुक्तजीवभन्दा बद्धजीवहरू धेरै नीच हुन् । 'कहिल्यै भगवानलाई बिर्सिनु हुन्न' यस उक्ति अनुसारको दिव्यज्ञान सम्पन्न बद्धजीवहरू होइनन् । बरू ज्ञानरहित भएर ज्वालाले



मूल अकुर्वाणाः कन्दर्पस्यक्रूरशरान् सेवमानाः दास्यधारणपूर्वकममृतम्भुञ्जानाः कामिन्यधरामृतं पिबन्तः 'स एकधा भवति द्विधा भवति' इत्युक्तिविपरीता अनेक-

अनु— वेष्टित तेजयुक्त ज्योतिर्मय शरीर धारणको सट्टा प्राकृत मलिन देहधारण गरी रहन्छन् । 'विपण्यवः' 'स्तुति गरी रहन्छन्' 'पार्षदहरुद्वारा स्तुति गरिन उहाँहरूको पनि प्रधाननाथलाई' यी उक्तिहरूमा कथित सर्वश्रेष्ठ परब्रह्म नारायणको विपरीत कुनै क्षुद्र देवताको स्तुति गर्दछन् । 'हजुरकै सेवा म गरूँला' श्रीगोदादेवीको यस उक्ति अनुसार बद्धजीवहरु

टिप्पणी— २ विपण्यवः— तद्विप्रासो विपण्यवो जागृवांसः समिन्धते विष्णोर्यत् परमं पदम् — वैकुण्ठमा भगवत्पार्षदहरू भयरहित स्थानमा पनि प्रेमको पराकाष्ठाले भय शंका गरेर वैकुण्ठनाथ भगवानको रक्षाको निमित्त वहाँको गुण पूरक स्तुतिगर्दै सर्वदा जागरूक (सावधान) रहनु हुन्छ । भगवानको परमपद यस प्रकारले प्रकाशमान भइ रहन्छ । + म हजुरकै सेवा गरूँला—यो दक्षिण भारतकी महिला आल्वार श्रीगोदादेवीको उक्ति हो । वहाँले भगवानसंग बिन्ति गर्नु भयो कि हजुरलाई मात्र आनन्द दिन हजुरको सेवा गर्न पाउँ । यस सेवामा मेरो केही कामना नरहोस् । हजुर र म दुवै जनालाई आनन्द होस् यो भाव छोडेर मेरो सेवाबाट हजुरलाई मात्र आनन्द होस् त्यस्तो सेवा म पाउँ ।

मूल— कुलेषु जायमानाः सुन्दररूपवत् चक्रशंखौ च धृत्वा तेन सहासंचरन्तः शरीरमार्गे भ्रमन्तः 'एतद्व्रतं मम'

अनु— भगवानको सेवा नगरेर कामदेवको क्रूर बाणहरूको अधीन भई भगवत्सेवाबाट उत्पन्न आनन्दरूपी अमृतपानको सट्टा कामिनीको अधरामृत पान गरी 'मुक्तजीव एक, दुई, तीन, पाँच, सात सय अथवा हजार शरीर धारण गर्नु हुन्छ' उपनिषदको यस उक्तिको विपरीत अनेक कुलमा जन्मग्रहण गरेर यिनीहरू हातमा शङ्खचक्र ली सुन्दर रूपवान भई परब्रह्मसंग नडुलेर चौराशी लक्षयोनि भन्ने शरीर-मार्गमा घुम्दछन् । 'यो मेरो +व्रत हो' श्रीरामचन्द्र भगवानको यस वचनमा कथित भएको भगवद्व्रतको विपरीत यत्किञ्चित् क्षुद्र विषयको आश्रय गरेर भगवानदेखि विछोड गराउने मनपरि व्रत आफूमाथि आरोप गराएर 'भगवानले दीबक्सेको विषयानुभवबाट उत्पन्न आनन्दको आदर गरी त्यसैको पछि दौडिरहेको थिएं' यस उक्ति अनुसार बद्धजीवहरू आफूलाई अङ्कमाल गर्न बाहु पसारि रहने भगवानको

+यो मेरो व्रत हो— सकृदेव प्रपन्नाय तवास्मीति च याचते । अभयं सर्वभूतेभ्यो ददाम्येतद् व्रतं मम— म हजुरकै हुँ भनी जो एकै पटक मेरो शरण पर्दछ म सबै भूतप्राणी देखी त्यसलाई अभय दिन्छु यो मेरो व्रत हो । (रामायण)



मूल— इत्युक्ततद्व्रतविपरीतं यत्किञ्चिदवलम्ब्य व्यावर्तनव्रत-मारोप्य 'तदीयमानंसंश्लेषरसमेवादरयाधावम्' इत्युक्तप्र-

अनु— दीर्घ बाहुबाट गिरेर क्षुद्र आनन्द दिने र अल्पसार भएका विषयहरू अनुभव गरी भगवानदेखि विमुख भई रहन्छन् । यिनीहरूको यो नीचस्वभाव देखेर पनि यिनीहरूलाई परित्याग नगरेर जीवात्मा र परमात्माको स्वाभाविक [1]सम्बन्धलाई हेतु संझी सजातीय अवतार बारम्बार ली रहने सबै जीव-हरूको हितैषी सर्वेश्वरले गरी बक्सेको [2]यत्न विशेष हुने एक दिन कदाचित् हुने [3]अवकाशमा सफल

टिप्पणी— १ स्वाभाविक सम्बन्ध— परमात्मासंग जीवात्माको धेरै प्रकारका सम्बन्धहरू छन । ती सम्बन्धहरूमध्ये नौ प्रकारका सम्बन्धहरू प्रधान हुन्— यथा पिता-पुत्र, रक्ष्यरक्षक, शेषशेषी, भर्तृभार्या, ज्ञातृज्ञेय, स्वस्वामी, आधाराधेय, शरीरात्मा, र भोक्तृभोग्य सम्बन्ध ।

२ यत्नविशेष— अद्वेष र आभिमुख्य भन्ने दुई अवस्था उत्पन्न गराएर भागवतहरूको संगतमा राखेर उनीहरू-द्वारा सद्गुरुको शरणागत गराउनु, त्यसपछि शमदमादि गुणहरूको उत्पादन गरेर उपयोगी ज्ञान भक्ति वैराग्य दिनु, तथा बीचबीचमा आएका विघ्नहरू नाश गर्नु यी कार्य परम्परा भगवानको यत्न विशेष हो ।

३ अवकाश— यादृच्छिक, प्रासङ्गिक र आनुषङ्गिक सुकृत भन्ने जीवकृत अज्ञात सुकृतहरू जीवलाई मोक्ष दिन भगवानको अवकाश (मौका) हुन् ।

मूल — कारेण दीर्घमहाराहोरण्यविषयामत्वा अल्पसारानास्वाद विमुखास्तिष्ठन्ति । एतेषां नीचस्वभावं दृष्ट्वा परित्यागमकृत्वा स्वाभाविकसम्बन्धमेव हेतूकृत्यसजातीयावतारान् कृत्वा संचरतः सर्वभूतसुहृदःसर्वेश्वरस्य यत्नविशेषः एकस्मिन् दिवसे कदाचित् कस्मिंश्चिदवकाशे फलति । तदायंचेतनः अद्वेषाभिसन्धिमान् मोक्षसमीक्षायुक्तः प्रवर्तमानवैराग्यः विवेकाभिनिवेशी च भूत्वा सदाचार्यसमाश्रयणं कृत्वा कृतयज्ञः सन् संसारस्यक्रौर्यमनुसन्धाय सर्पास्यगतमण्डूकवत् दावाग्निना चतुर्दिक्षु व्याप्तमृगीवत् कांटिद्वयज्वलितकाष्ठमध्यगतपिपीलिकावच्च कोवासहायो भवतीति तरंगित-

अनु — हुन्छ । जुन व्यक्तिको निमित्त भगवानले अवकाश पाइबक्स्यो त्यस जीवप्रति भगवानले विशेष शुभ कटाक्ष गरी बक्सिन्छ । तब उनै जीव अनादिकालदेखि आई रहेको द्वेष त्याग गर्दछन्, र मोक्षको विचारमा उहाँ लाग्नु हुन्छ, संसारदेखि उहाँको वैराग्य उत्पन्न भई विवेकमा उहाँको अभिनिवेश वृद्धि हुन्छ, उहाँ सदाचार्यको आश्रय पाएर ४कृतयज्ञ हुनुहुन्छ ।

४ कृतयज्ञः— विदुः कृष्णं ब्राह्मणास्तत्त्वतो ये । तेषां राजन् सर्वयज्ञाः समाप्ताः । (महाभारत) जुन ब्राह्मणहरूले कृष्णलाई यथार्थ रूपले जान्दछन् उहाँहरूका सबै यज्ञ समाप्त भई सके । कृष्ण नै परब्रह्म, सृष्टि-



मूल— जलसमुद्रे निमज्जन्निव व्याकुलो भूत्वा 'बहुप्रदर्शय-न्नाशयसि' 'इतः परमपि नाशयसि' 'पञ्चेन्द्रियाणि दिशिदिशि बलात् प्रेरयन्ति' 'वस्त्रमन्नं च देहीति बाधन्ते' इतीन्द्रियाणां क्रौर्यं स्मृत्वा आक्रुश्य 'संस्कारहितदुःखानि ददति एतानि' 'कोऽयं लोकस्वभावः' 'प्राणत्यागं दृष्ट्वा न सहामि' 'अहो अयं लोकस्वभावः' इति संसारिणां दुःखं न सहते । 'प्रमत्ता एव मम सर्वेऽपि' 'लौकिकमनुष्यैः सह मम सँगो दुःसह' इति 'लौकिकैः सहसंगमत्यजम्' इतिचोक्त-

अनु — त्यसपछि उनै भाग्यवान मुमुक्षु श्रीवैष्णव संसारको क्रूरतालाई संझी सर्पको मुखभित्र रहेको भ्यागुतो जस्तै, चारैतर्फ डढेलोले घेरिएकी हरिणी जस्तै, दुई छेउमा आगो बलेको दाउराको बीचमा परेको कमिला जस्तै आफुलाई असहाय संझेर 'अहिले यहाँ मेरो सहाय हुने को छ' यस प्रकारले विशाल विशाल तरङ्गले

टिप्पणी— स्थिति संहारकर्ता, सर्वान्तर्यामी, मोक्षदाता सर्व रक्षक, सर्वाधार, सर्वसेषी, जगत्स्वामी हुनुहुन्छ इत्यादि रूपले कृष्णको यथार्थ स्वरूप ज्ञान भएको हुनाले जसले कृष्णलाई आफ्नो उपाय र उपायलभ्य फल संझेर उहाँको शरण पर्दछन् तिनीहरूले मोक्षको निम्ति गर्नु पर्ने सबै उपाय गरी हाल्नु भयो तिनीहरूका सबै उपाय त्यसै सिद्धि हाल्दछन् । भगवान आफै स्वतः उपाय भएर मोक्ष दी बक्सिन्छ ।

मूल— प्रकारेण जानक्या राक्षसीभिः सहवासो यथा असह्यमानोऽभूत्तथा असत् शरीरं सत्त्वेन गृहीत्वा अन्नमेव वस्त्रमेवादृत्य संचरद्भिः शौरिचिन्ताविमुखैः संसारिभिः सहवासमसहमानः 'एतत्स्वभावमितः परं न प्राप्नुयाम्' 'कुत्रेतः परं प्राप्नुयां दिवसं न जानामि' 'परमाकाशं

अनु— चञ्चल भएको समुद्रमा डुब्न लागेको नौका सरह व्याकुल भई 'धेरै विषय देखाएर मलाई नाश गरी बक्सिन्छ' 'म शरण परें तैपनि मलाई नाश गरी बक्सिन्छ, पञ्चेन्द्रियहरू सबै दिशामा आत्मालाई बलजफत पठाउँछन् तथा अन्न देउ, वस्त्र देउ भनेर बाधा दिन्छन् । यस प्रकारले इन्द्रियहरूको क्रूरता याद गरेर कराएर 'यिनीहरू असंख्य दुःख दिन्छन्, अहो संसारको कस्तो भयङ्कर स्वभाव हो, संसारीहरूको देह त्याग देखेर म सहन गर्न सक्तिन, अहो संसारको स्वभाव यस्तो भयङ्कर हो' यस प्रकारले उनै महात्मा संसारी जीवहरूको दुःख देखेर सहन गर्न सक्नु हुन्न । 'मेरा सबै साथीहरू प्रमत्त हुन्, लौकिक मनुष्यहरूको संगत मलाई असह्य भएको छ, लौकिक मनुष्यहरूको संगत मैले छोडिसकें' श्री शठकोप स्वामीको यो उक्तिहरू अनुसार तथा अशोकवाटिकामा राक्षसीहरूको सहवास श्री जानकी महारानीलाई जस्तो असह्य भएको थियो त्यस्तै अशत् शरीरलाई सत् सम्झेर



मूल— तेजस्वी सन् कदा प्राप्नुयाम्' इतः परं धर्तुं न शक्नोमि' 'आह्वानकाल इदानीमपि न ह्रस्वीभवति' इति भगवदनुभवालाभे अत्यन्तं दुःखं प्राप्य अग्निशंयुक्त मधूच्छिष्टसदृशः सन् 'द्रष्टुं नागच्छसि' इति 'नेत्रं मुखं च शुष्यति' इति दर्शनालाभे एकं दिवसं कल्पसहस्रं मन्वानः 'प्रायशः पापकारित्वान्मृत्योरुद्विजते जनः । कृतकृत्याः प्रतीक्षन्ते मृत्युं प्रियमिवा-

अनु— अन्न र वस्त्रलाई नै आदर गरी संसारमा रहने भगवत्चिन्ता विमुख संसारी जीवहरूको सहवास उनै ज्ञानीलाई सहन हुँदैन । 'यो स्वभाव मेरो फेरि नहोस् म कहाँ गएर कहिले भगवान पाउँला त्यो दिन म जान्दिन, तेजिलो शरीर धारण गरेर कहिले वैकुण्ठ जाउँला, म आफूलाई अब म समाह्लन शक्तिन मलाई बोलाउने समय अहिले पनि नजिक आएको छैन' यस प्रकारले भगवानको दर्शन नपाउँदा अत्यन्त दुःखित भई आगोको नजिक राखेको मैन जस्तै उहाँको हालत हुन्छ । तब 'मलाई हेर्न आउनु हुन्न मेरा नेत्र र मुख सुकेर गए' यस प्रकारले भगवानको दर्शन बिना उनै महात्माको एक दिन हजार कल्प जस्तै बीत्दछ । 'पाप गरेको हुनाले प्रायः पापी मानिसहरू मृत्युदेखि डराउँछन् तर कृतकृत्य मानिसहरू मृत्युलाई प्यारो पाहुना जस्तै पर्खनु हुन्छ' । यस प्रमाण

मूल— तिथिम्' इत्युक्तप्रकारेण शरीरं त्यक्तुं मनोरथंकृत्वा महिष्या उच्छिष्टे आदरकारिराजपुत्र इव स्वेन त्यक्ते देहे आदरं कुर्वाणनीश्वरं 'नाशं गच्छतु' इत्यपेक्ष्य 'भुक्तवान् सर्वमप्यास्वादय, आस्वाद्य अन्तर्हितोऽसि' 'भिया शपथं कारिन्स्त्वया शपथं कारितः' 'पश्य इतः परमहं गन्तुं न दास्यामि' इति प्रतिरुध्य परितोऽवरुध्य स्वयं यथा प्राप्नुयात्तथा परमभक्त्या उन्मत्तकी

अनु— अनुसार उनी ज्ञानी मुमुक्षु शरीर छोड्ने इच्छा गर्नु हुन्छ। तथापि आफ्नो प्यारी रानिको उच्छिष्टलाई पनि आदर गर्ने राजकुमार जस्तै उनै मुमुक्षु वैष्णवको शरीरलाई भगवान आदर गरी बक्सिन्छ। त्यो थाहा पाएर यद्यपि उनै ज्ञानी भक्तले आफ्नो शरीरको माया छोड्नु भयो तथापि भगवानले उहाँको त्यै शरीरलाई नै आदर गरी बक्सिन्छ। त्यो थाहा पाएर उनै ज्ञानी महात्माले 'मेरो शरीर नाश होस्' भनी शरीर छुडाइ दिन भगवानसंग प्रार्थना गर्नु हुन्छ। त्यतिमात्र होइन 'वहाँले मलाई अनुभव गरी बक्स्यो, सबकुछ अनुभव गरी बक्स्योस्, अनुभव गरी अदृश्य होइबक्स्यो, हजुरको शपथ छ, महालक्ष्मीको शपथ छ, हेरिबक्स्योस् अब म हजुरलाई जान दिन्न' यस प्रकारले उनै ज्ञानी भक्त भगवानलाई रोक्नु हुन्छ, कोही धनवानको आगन आँटेको छोरीलाई त्यसको



मूल— भवति। अथवा एतन्मात्रं विनापि उक्तिमात्रे अन्वयं-कृत्वा 'अहं स्थितस्थानान्न गच्छामि, स स्वदेवं

अनु— पिता चारैतर्फ घेर्नु हुन्छ, त्यस्तै उनै महात्मा पनि 'म भगवानलाई घेरेर आफ्नै चेष्टाले पाउँला भन्ने भावनाले परमा भक्तिको वश भई प्रेमोन्मत्त हुनु हुन्छ। ( यहाँसम्म श्री लोकाचार्य स्वामीले भक्तियोग भन्ने उपायान्तरको उत्पत्ति र वृद्धिको क्रम देखाउनु भयो। अब यहाँदेखि शरणागतिको वर्णन गर्नु हुन्छ )। शरणागतिलाई प्रपत्ति पनि भन्दछन्। अथवा+ भक्तियोगको मार्ग छोडेर पनि 'अहंत्वा

टिप्पणि— +मोक्ष प्राप्तिका लागि ध्यान उपासना आदि शब्द-वाच्य वेदान्तको भक्तियोग र शरणागति दुई विभिन्न मार्ग हुन्। ध्यान, अर्चना, स्तुति, प्रणाम इत्यादि भक्तियोगका स्वरूप हुन्। शास्त्र पढेर अथवा जन्म-जन्मान्तरका पुण्यको उदय भए भक्त भक्तियोगमा प्रवृत्त हुनु हुन्छ। अतः भक्ति भक्तको प्रवृत्ति साध्य हो। अहरहः निरन्तर अभ्यासद्वारा भक्ति बढाउनु पर्दछ। प्रवृत्ति छोडेपछि भक्ति हराइ हाल्दछ। त्यस कारण भक्तियोगको सफलताको भार भक्त माथि नै रहन्छ र भक्तियोग जीवात्माको अत्यन्त पारतन्त्र्य भन्ने स्वरूपको नाशक हो। जीवको प्रवृत्ति जस्तै होस् त्यो त्यसको स्वतन्त्रताको द्योतक हो।

मूल— भवन्तमाह्वयति चेत्तदा पश्यामि' इत्युक्त प्रकारेण वैय्यर्थ्यरहिते मार्गे वर्तमानस्य विलक्षणस्य परमभागवतस्य समाश्रयणं वा प्राप्य वर्तमानःविशदज्ञानवान्

अनु— सर्वपापेभ्यो मोक्षयिष्यामिमा शुचः' चरमश्लोकमा श्रीकृष्णभगवानको कथित यस वचनलाई महाविश्वासपूर्वक आश्रय गरेर 'म आफ्नो स्थितिको स्थानबाट × हट्ने छैन' 'बहाँ ( श्री विष्णुचित्त आल्वार ) आफ्नो

टिप्पणी— +मोक्ष प्राप्तिको उपाय रूपले। शास्त्रमा कथित भएका सर्व उपायहरू छाडेर केवल भगवानलाई मात्र उपाय संझनु यतिमात्र शरगति हुनाले शरणागत भइसके पछि मोक्षको निमित्त कुनै प्रवृत्ति चाहिएको छैन। त्यस कारण शरणागति जीवको निवृत्ति साध्य हो र शरणागतको उद्धारको भार भगवानमा जान्छ र शरणागति कदापि व्यर्थ हुँदैन। शरणागति भन्दा आचार्याभिमान उत्तम हो यसलाई पञ्चमोपाय अथवा चरमोपाय भन्दछन्। भगवानको सट्टा गुरुलाई नै उपाय संझनु आचार्याभिमान हो। श्री गोदादेवी आफ्नो पिता श्री विष्णुचित्त आल्वारलाई गुरु संझनु हुन्थ्यो। उहाँले भगवानलाई भन्नु भयो कि मलाई पापिनी संझेर हजुरले मलाई त्याग गरी बक्से तापनि मेरो निमित्त पिता हुनु हुन्छ। मेरो पिताले हजुरलाई बोलाई बक्सिन्छ भने हजुर अवश्य सवारी होइ बक्सिन्छ त्यस बखत म हजुरको दर्शन गरुंला। त्यस कारण शरणागति मार्ग छोडेर म उपायान्तर गर्दै छैन।



मूल— दोषरहितो भूत्वा निर्दोषस्तिष्ठति। तस्य शरीरावसानकाले ईश्वरः स्वचरणयोरयंयदा मस्तकमगोकत्तदा आरभ्य 'ऋणं प्रवृद्ध' 'तव दासानां किं कुर्यामहमिति स्थितस्त्वम्' इत्युक्तप्रकारेण महत्ऋणं प्रवृद्धमिति महोपकारविशिष्टस्तं प्रत्युपकारमन्विष्य तमन्यमज्ञात्वा कृतं कैङ्कर्यं स्वीकर्तुं विचार्य भग्नदन्तसर्पवत् संसारस्याङ्कुरो यथा न स्यात्तथा मूलस्य छेदनेऽपि शव

अनु— इष्टदेव हजुरलाई जब बोलाई बक्सिन्छ तब म हजुरको दर्शन गरुंला' श्री गोदादेवीको यस उक्ति अनुसार कहिल्यै व्यर्थ नहुने मार्गमा रहने कुनै विलक्षण परम भागवतको समाश्रयण प्राप्त गरेर संसारमा रहेर गुरु कृपाबाट आत्म स्वरूपको विशद ( स्पष्ट ) ज्ञानवान र दोषमुक्त भएर निर्मल रहनु पर्दछ। यस्तो शरणागत महात्माको शरीर छोड्ने समय आउँदा उनी जुन दिन शरणागत हुनु भयो त्यस दिनदेखि आरम्भ गरेर 'ऋणं प्रवृद्धम्' तथा 'हजुरको दासहरूको निमित्त म के गरूं भनी हजुर चिन्तित रही बक्सिन्छ' यस

टिप्पणी— श्री कृष्ण भगवानले द्रौपदीलाई भनिबक्स्यो हे द्रौपदी गोविन्देतियदाक्रन्दत् कृष्णमांदूरवासिनम्। ऋणं प्रवृद्धमिवमे हृदयान्नापसर्पति— म द्वारकामा बस्दा तिमीले हे गोविन्द भनेर मलाई पुकार्‍यो ऋण नतिरेसम्म ब्यो ऋण जस्तो बढ्दै जान्छ त्यस्तै त्यस बखतको तिम्रो पुकार मेरो हृदयबाट जाँदैन। (महाभारत)

मूल— उत्थायदशति किमित्यतिशंकां कृत्वा अमराणामुचित देशं गृहीत्वा गमयितुं कृतनिश्चयः सन् अस्यचेतनस्याभिनिवेशाथासो गोष्पदस्थाने यथा स्यात्तथा स्वकार्यं समुद्रस्थाने यथास्यात्तथा महाभिनिवेशायासवान् भूत्वा एकक्षणमपि विश्लेशमकुर्वाणः यथा दशरथ-चक्रवर्ती श्रीरामचन्द्राभिषेकसमये वसिष्ठवामदेवादीनाहूयोद्यमं कृतवान् तथायमपि भगवान् नित्यसूरिण आहूय मार्गालङ्करणार्थम् 'अलङ्कारविधिं कृत्स्नं कार-मास वेश्मनि' इत्युक्तप्रकारेण वैकुण्ठगृहमलंकारयति। अनादिकालार्जितानि अस्याचार्यसमाश्रयणकरणकाला-दारभ्य कृतानिच दण्डेन मस्तकस्य च ताडनवत प्रति-हतशक्तिकतया विनष्टस्वरूपाणि 'समीपे 'वर्तमानान्यपि

---

अनु— उक्ति अनुसार ठूलो क्षण अफ वृद्धि प्राप्त भई ममाथि आएको छ भन्ने संझी र शरणागत हुनुलाई नै उनले गरेको आफ्नो+ महोपकार संझी अब यसको प्रत्युपकार गर्नु पर्ला भन्ने संझनाले योग्य प्रत्युपकार खोजेर केही नपाउँदा भगवानले उनी महात्माकृतकैंकर्य वैकुण्ठमा म स्वीकार गरूंला भन्ने विचार गरी

---

पिप्पणी— +शरणागत आफ्नो उद्देश्यको निमित्त भगवानको शरणागत भए तापनि भगवान अति उदार हुनाले शरणागतले मेरो ठूलो उपकार गर्‍यो भन्ने संझी बक्सिन्छ।



मूल— न दृश्यन्ते' इत्युक्तप्रकारेण वर्तमानानि पूर्वाघानिउत्तराघानि च अनुकूलविषये प्रतिकूलविषयं च वरुणमुद्दिश्यावरोपितस्य धनुःशरस्यमरुकान्तारविषयेप्रक्षेपणवत् अन्यत्रसंक्रमणं कारयित्वा .एतस्य सम्बन्धवतः नरकाननुभवतः 'एतत्सम्बन्धिनश्चान्ये' इत्युक्तप्रकारेण स्वर्गस्थान् इव कर्तुं निश्चित्य 'ऊढः पश्चात्मनातेनताचर्यरूपेणेति' 'मुदितपक्षिणं स्वयमारुह्य संचरति' इति चोक्तप्रकारेण कृपासमुद्रं पक्षिणं संचारयेत्' इत्येतदाशाप्रकारेण गरुत्मन्तमारुह्याविर्भूय स्वर्णपर्वताधिरूढमहामेघसदृशं स्वदिव्यमङ्गलविग्रहमनुभाव्य आतिवाहिकानाहूय एतस्य सत्कारक्रमेण सत्कारकरणमाज्ञापयति। पश्चात् 'इन्द्रियैर्मनसि सम्पद्यमाने वाङ्मनसि सम्पद्यते मनः प्राणे प्राणः परस्यां देवतायाम्' इत्युक्तप्रकारेण बाह्यकरणाण्यन्तःकरणे लीयन्ते अन्तःकरणं प्राणेन सह लीयतेप्राणः एतच्चेतने सम्बन्धीभवति। अयं चेतनः भूतसूक्ष्मविशिष्टःसन् परमात्मनःसमीपंप्राप्नोति। पश्चात् यथा घर्मकाले रविकिरणतप्तपुरुषः सच्छायं वृक्षमाश्रित्य शान्तश्रमो भवति तथा संसारदुःखार्कतापतापितोऽयं

---

अनु— बक्सिन्छ। सर्पका विषको दाँत भाँचि दिए त्यो दाँत जस्तो फेरि निस्किन्दैन त्यस्तै सब अनर्थको मूल संसार सम्बन्धलाई नै छेदन गर्नु पर्दछ भन्ने विचार गरेर पनि मुर्दा उठेर दोक्ला कि भन्ने शंका

मूल — वासुदेवतरुच्छायामाश्रित्य विश्रान्तो भवति । तस्य च तिरुक्कोवलुरदिव्यदेशगमनसमये श्रीपरकालसूरेः 'स्वाभिमतदिव्यदेशेषु सर्वेष्वपि, स्वचरणौ नीत्वा' इत्युक्तप्रकारेण लोकविक्रान्तचरणौ यथा पाथेयभूतौ तथा प्राणप्रयाणपाथेयं 'पाथेयं पुण्डरीकाक्षनामसंकीर्तनामृतम्' इत्युक्तप्रकारेण द्वयवचनमेव पाथेयं भवति । 'एतेन प्रतिपद्यमानाः देवयानपथाः सर्वे मुक्तिमार्गाभिलाषिणः' इत्युक्तप्रकारेण अर्चिरादिमार्ग एव महामार्गो भवति । अण्डाद्बहिर्गमयिता 'स्वाम्याप्ततमः शेषशायी कुटिल केशवान् पुण्डरीकाक्षो बिम्बाधरः कालमेघः श्रीरङ्गनिलयः' सहायभूत' इति स एव मार्गसहायो भवति।

अनु — गर्नु जस्तै भगवानले पनि अति शंका गरेर उनै मुमुक्षुलाई आफ्ना पार्षदहरू रहने योग्य देशमा अर्थात् वैकुण्ठमा आफैसंग लैजाने निश्चय गरेर उनै महात्माको भगवत्प्राप्तिको निमित्त अभिनिवेशमा परिश्रम गोष्पद जस्तै तथा आफ्नो अभिनिवेशमा परिश्रम समुद्र जस्तै होस् त्यस्तो महा अभिनिवेशको योग्य परिश्रम गर्न तयार भएर भगवान उनै महात्मालाई एकक्षण पनि छाडेर अलग रही बक्सन्न । श्री रामचन्द्र भगवानको अभिषेकको समय श्री दशरथ महाराजले वसिष्ठ वामदेव प्रभृति मन्त्रीहरूलाई बोलाएर जस्तो उद्यम गर्नु भयो त्यस्तै श्री वैकुण्ठनाथ भगवानले



मूल विरजातीरं, तिल्यवृक्षः, आरंहृदतटं च विश्रामस्थलं भवति । श्रीमहामण्डपमेवमन्तव्यस्थानं भवति । अर्चिरादिपुरुषा एव संलापसहाया भवन्ति । आकाशे शोभमानव्याप्ताभ्रध्वनिरेव प्रयाणपटहध्वनिर्भवति । मार्गप्रदर्शकोऽस्माकमीश एवेति हार्दः मार्गप्रदर्शको भवति । प्रीत्यतिशयेनानादिकालमारभ्य स्वविषये क्रूरं संसारं 'नरकं हस चित्त' इत्युक्तप्रकारेण परावृत्य पश्यन् हसन् महावैकुण्ठं द्रष्टुं पूर्वमेव विद्यमानायामाशायामुपर्युपरि वर्धमानायां श्रीजानकी विभीषणप्रभुश्च लंकाया यथा निष्क्रान्तौ तथा हृदयकमलाभिष्क्रम्य 'शतं चैका च हृदयस्य नाड्यः' इत्युक्तप्रकारेण

अनु— पनि आफ्नो नित्यपार्षद्हरुलाई बोलाएर बाटोको शृङ्गार गराउन 'श्री दशरथ महाराजले' 'आफ्नो दर्बारमा शृङ्गारको सबै विधिहरू गराई बक्स्यो, श्री रामायणको यस उक्ति अनुसार वैकुण्ठ गृहको शृङ्गार गराइ बक्सन्छ। जस्तो कसैको शिर र मुखलाई लट्ठिले तोडि दिए त्यसले केही गर्न सक्तैन त्यस्तै उनै मुमुक्षु महात्माले अनादिकालदेखि अर्जन गरिएका र गुरुको शरण परेको दिनदेखि प्रमादले गरिएका कर्महरूका फल दिने शक्तिलाई भगवानले नाश गरी बक्सन्छ र त्यस कारण ती कर्महरूको स्वरूप नै नाश भइ हाल्दछ। श्री रामचन्द्र भगवानले वरुणदेवता-

मूल— हृदयाश्रितास्वेकाधिकशतसंख्याकासुनाडीषु सुषुम्णानामिकया मूर्धन्यनाड्या विद्यामाहात्म्येन देवयानानुस्मृत्या च प्रसन्ने हार्दे हस्ते दीपं गृहीत्वा गच्छति सति शिरः कपालं भित्वा ततः 'तासु नाडीषु सूप्ताः आभ्यो नाडीभ्यः प्रजायन्ते तेऽमुष्मिन्नादित्ये सूप्ताः अथतैरेव रश्मिभिरूर्ध्व आक्रमते' इत्युक्तप्रकारेण तया नाड्या सह सम्बद्धमादित्यरश्मिमनुसरन् 'ओङ्काररथमारुह्य' इत्युक्तप्रकारेण प्रणवरथमारुह्य मनः सारथिं कृत्वा गमनसमये कैयारदशकदिवसे यथा सर्वेऽवयवा नूतना जातास्तथा विभूतिद्वयमपि नवं नवं भासते।

---

अनु— लाई मार्न धनुषमा चढाइसकेको बाणलाई जस्तो मारवाड देशमा पर्यौंको बवस्यो त्यस्तै 'नजिक छन् तापनि देखिँदैनन्' यस कथनानुसार उनै माहात्माको अभ्र फल भोग्न बाँकी रहेका पूर्व पाप र उत्तर पाप भन्ने कर्महरूलाई भगवानले उनै मुमुक्षु महात्माको अनुकूल र प्रतिकूलमानिसहरूमा बाँडि दी बक्सिन्छ। त्यसपछि 'उनका अरू सम्बन्धीहरू' यस उक्ति अनुसार उनै महात्माका नरकमा दुःख पाइरहेका शरीर सम्बन्धीहरूलाई स्वर्गवासीहरू सरह गर्नेनिश्चय गरी बक्सिन्छ। 'उनै पश्चात्मा गरुड-पक्षीले हजुरलाई वहन गर्नु हुन्छ।' 'आनन्दित गरुड-पक्षी माथि आफै राज भएर झुलि बक्सिन्छ' यी उक्तिहरू अनुसार



मूल— समुद्रः स्वगाम्भीर्यं सर्वं विहायाधःस्थमृत्तिकां गृहीत्वा उपरि कलुषीभूय ससंभ्रमं नृत्यति। उपरितनलोकस्थाः सर्वेप्युपहारपाणयो भूत्वा महान्ति तोरणानि बध्वा

---

अनु— तथा 'अत्यन्त दयालु गरुड-पक्षीलाई मेरो अगाडि ल्याई बक्सिन्छ कि' भक्तको यस्तो आशा अनुसार गरुडमाथि राज भई प्रकट भएर उनै महात्मालाई सुवर्णको पर्वतमाथि एकत्रित भएको विशाल मेघ जस्तै देखिएको आफ्नो दिव्यमङ्गलविग्रहको अनुभव दिएर आतिवाहिक भन्ने देवताहरूलाई सत्कारको क्रमले उनै महात्माको सत्कार गर्न आदेश दी बक्सिन्छ। त्यसपछि इन्द्रियहरू मनमा लिन हुन्छन्, वागिन्द्रिय मनमा लिन हुन्छ। मन प्राणसंग मिल्दछ, प्राण परदेवतासंग मिल्दछ यस श्रुति वाक्य अनुसार बाह्य इन्द्रियहरू अन्तःकरणमा लीन हुन्छन्, अन्तकरण प्राणमा लीन हुन्छ, प्राण जीवात्मासंग मिल्दछ, जीवात्मा सूक्ष्म पञ्चभूतसंग मिलेर परमात्माको नजिक जान्छ। त्यसपछि ग्रीष्मकालमा सूर्यकिरणले तप्त भएको कुनै व्यक्ति सघनछाया भएको वृक्षको आश्रय पाएर जस्तो श्रमरहित हुन्छ त्यस्तै संसाररूपी सूर्यको तापले पीडित हुनु भएको उनै महात्मा वासुदेवरूपी वृक्षको छायाको आश्रय गरेर विश्राम लाभ गर्नु हुन्छ। तिरुकोवलूर

मूल— सर्वमप्याकाशावकाशं पूर्णकुम्भैः पूर्णकृत्वा धूपपुष्पाणि वर्षन्ति । अयमेककालमत्रस्थित्वा गच्छेदित्याशया अग्रे देवेषु वासस्थानं कल्पयत्सु सर्वलोककर्पं यथा

अनु— भन्ने दिव्य देशमा सवारी हुँदा 'आफना सबै प्रिय दिव्य देशहरूमा हजुरका दुई चरणको कीर्तन गरेर' श्री परकाल सूरिको यस उक्ति अनुसार संसारलाई नाघ्ने भगवानको दुई चरण जस्तो उनै सूरिको पाथेय ( बाटो खर्च ) भएको थियो त्यस्तै 'पुण्डरीकाक्ष भगवानको नाम संकीर्तनरूपी अमृतनै पाथेय हो' 'यस उक्ति अनुसार उनै महात्माको निमित्त द्वय मन्त्रको अनुसन्धान नै वैकुण्ठ यात्रामा पाथेय हुन्छ । यस मार्गमा जाने सबै मुक्ति पाउँछन्' 'देवयान मार्गमा जाने सबै मुक्ति पाउँछन्' यस वचन अनुसार अर्चिरादि मार्ग नै उनै मुमुक्षु भक्तको महामार्ग हुन्छ । 'स्वामी आप्तजन शेषशायी, कुटिलकेश भएको पुण्डरीकाक्ष बिम्बाधर कालमेघ श्री रङ्गनाथ सहाय होइ बक्सिन्छ' यस उक्ति अनुसार उनै भगवान मार्गमा सहायक होइ बक्सिन्छ । विरजानदीकोतीर तिल्यवृक्ष, र आरंहृदको तट विश्राम स्थल हुन्छन् । श्री महामणिमण्डप नै गन्तव्य स्थान हुन्छ । अग्नि, वायु इत्यादि आतिवाहिक देवताहरू नै बाटोमा डुरागर्ने सहायक हुनुहुन्छ । आकाशमा व्याप्त



मूल— भवति । तथा समुद्रेषु महाघोषं कुर्वत्स्विव वाद्येषु वाद्यमानेषु मार्गे वर्तमानेषु देवेषु गमनसमये मम स्थानं स्वीक्रियतामिति स्वस्वस्थानानि ऐश्वर्याणिच

अनु— भएको सुन्दर मेघको ध्वनि नै यात्राको आरम्भमा बजाउनु पर्ने नगडाको ध्वनि हुन्छ । 'हाम्रो ईश्वर मार्ग प्रदर्शक होइ बक्सिन्छ' यस उक्ति अनुसार हृदयवासी भगवान नै मार्ग प्रदर्शक होइ बक्सिन्छ । 'हे मन नरकलाई हास्य गर' यस उक्ति अनुसार आफूसंग अनादिकालदेखिक्रूर व्यवहार गर्ने संसार-लाई पछिल्तिर फर्कौ देखेर उनै मुमुक्षु भक्त आनन्दको पराकाष्ठाले हाँस्नु हुन्छ । महावैकुण्ठको दर्शनको अघिदेखि विद्यमान उहाँको आशा बढ्दै जान्छ । रावणवध भएपछि श्री रामचन्द्र भगवानको दर्शनको निमित्त जस्तो श्री जानकीमहारानी र विभीषण प्रभु लंकाबाट निस्किनु भयो त्यस्तै उनै प्रपन्न महात्माको आत्मा हृदय कमलबाट निस्किनु हुन्छ । 'हृदयको नाडीहरूका संख्या एकसय एक छ' यस श्रुति वाक्य अनुसार हृदयमा रहने एकसय एक नाडीहरू मध्ये सुषुम्णा भन्ने नाडी ( शिरसम्म भएको हुनाले जसलाई मूर्धन्यनाडी पनि भन्दछन् ) द्वारा उनै जीवात्मा जानु हुन्छ । मन्त्रार्थ ज्ञानको महिमा र अर्चिरादि मार्गको निरन्तर चिन्ताको कारण प्रसन्न

मूल — समर्पयत्सु केषुचिद्गीतानि गायत्सु केषुचिद्यागादिसुकृतफलान्यर्पयत्सु अन्येषु केषुचिद्धूपदीपादिभिरर्चयत्सु केषुचित्काहलशंखान्वादयत्सु अतिकान्तिमन्नयनवतीषु आतिवाहिकमहिषीषु इदमराजकमाभूदेतत्पा-

---

अनु — होइ बकसेको हृदयवासी भगवान अन्धकारमा दीया देखाउनु जस्तै त्यस नाडीलाई प्रकाशित गर्दै उनै आत्माको अघि अघि सवारी होइ बक्सिन्छ। त्यै नाडीको बाटो गएर शिरः कपाल ( शिरको सहस्रार चक्र) भन्ने माथिल्लो भागलाई भेदन गरेर ती नाडीहरूको बाटो गरी उनै जीवात्मा सूर्यमा पुग्दछन् र अझ माथि जान्छन् यस श्रुतिवाक्य अनुसार सूर्य किरणहरूसंग मिलेर सूर्य मण्डललाई भेदन गरेर माथि जान्छन्। 'ओंकाररूपी रथमा बसी मनलाई सारथी बनाई माथि जाँदा' यस श्रुति वाक्यअनुसार र कैयार दशकको वर्णन अनुसार श्री शठकोप सूरिले जस्तो आफ्नो सबै अङ्गहरूलाई नवीन रूपले देख्नु भयो त्यस्तै उनै मुमुक्षु महात्माले पनि लीला विभूति र नित्य विभूति दुवै विभूतिलाई नवीन रूपले देख्नु भयो। समुद्र आफ्नो गाम्भीर्य पूर्णरूपले छोडेर तलको मृत्तिकालाई माथिल्याएर धमिलो भई खूब उमङ्ग साथ नाच्दछ। माथिल्लो लोकहरूमा रहने सबै देवताहरू हातमा उपहार लो ठूला ठूला तोरण बनाई



मूल — लय इतिमङ्गलाशासन कुर्वतीषु मरुत्सु वसुषु च अयं त्यक्त्वा गच्छति चेदीश्वरेणास्मदधीनं कृतमिदं स्थानं स्थितं स्यादित्यनिष्ट्य लोकान्तरेषु चानुसृत्य तच्छ्रोत्र-

---

अनु — सम्पूर्ण आकाशको भित्री भागलाई पूर्णकुम्भले भरी दिन्छन्, धूप दिन्छन्, पुष्पवृष्टि गर्दछन्, वैकुण्ठ सवारी हुने यिनी वैष्णव अहिलेर बसेर सवारी भए हुन्थ्यो भन्ने आशाले उनी देवताहरू बाटोमा बस्ने स्थान बनाइ राख्नु हुन्छ। त्यस बखत तिनीहरू सबै लोकहरूलाई कम्पायमान गराउने समुद्रको महागर्जन जस्तै अर्चिरादिमार्गमा वाद्यवादन गर्नु हुन्छ। उनै मुमुक्षु महात्मा क्रमशः माथिल्लो लोकहरूमा सवारी हुने बेलामा उनै देवताहरू हामीहरूका स्थान ग्रहण गर्नु होस् भनेर आफ् आफ्नो स्थान र ऐश्वर्य उनलाई अर्पण गर्नु हुन्छ, कोही गाउनु हुन्छ, कोही आफूले गरेका याग आदि पुण्य कर्मको फल अर्पण गर्नु हुन्छ, कोही धूप, दीप इत्यादिले उहाँको पूजा गर्नुहुन्छ, कोही काहली, शङ्ख इत्यादि बजाउनु हुन्छ, आतिवाहिक देवताहरूका अत्यन्त सुन्दर नेत्र भएका महिषीहरू यस स्थानलाई अराजक गराएर नजानुहोस् यहीं बसेर यस स्थानको पालन गर्नु होस् भनी मङ्गलाशासन गर्नु हुन्छ, उनञ्चास मरुद्गण र अष्टवसु उहाँ हाम्रो

मूल— गोचरं यथास्यात्तथा अन्येषु सर्वेष्वञ्जलिं कुर्वाणेषु गत्वा' इत्युक्तप्रकारेण महता सत्कारेण गच्छति 'तदार्चिषमेवाभिसंभवन्ति अर्चिषोऽह्नः अह्नः आपूर्यमाणपक्षम्' 'अग्निर्ज्योतिरहःशुक्ल षण्मासा उत्तरायणम् ।' इतिछान्दोग्यवाजसनेयकौषीतकीप्रभृतिषूक्तप्रकारेण अर्चिरादिपुरुषेषु मार्गं प्रदर्शयत्स्वयं गच्छति ।

❀ इत्यर्चिरादिमार्गे प्रथमं प्रकरणम् । ❀

---

अनु— यस स्थान छोडेर माथि जानुभयो भने ईश्वरले हाम्रो अधीन गरी बक्सिएका हाम्रा स्थानहरू खोसेर लौ बक्सिन्छ हाम्रा स्थान हाम्रै रहन्छन् भन्ने संभनु हुन्छ र आफ्नो स्थानबाट गिर्ने भय नहुनाले आफ्नो सीमासम्मगई त्यहाँबाट नफर्की मुमुक्षु वैष्णवको पछि लागेर अन्य देवताहरूका लोकमा गई आफ्नो प्रार्थना उहाँलाई सुनाउनु हुन्छ तथा 'अन्य देवताहरू हात जोडि रहनु हुन्छ' यस कथनानुसार उनै प्रपन्न मुमुक्षु वैष्णव सबै देवताहरूद्वारा अत्यन्त पूजित भई जानु हुन्छ । अग्निर्ज्योतिरहः शुक्ल षण्मासा उत्तरायणम् । (गीता) 'मुक्तजीव पहिले अग्निलोक, त्यसपछि दिनाभिमानी, त्यसपछि शुक्लपक्षाभिमानी देवताको लोकमा पुग्नु हुन्छ' यस प्रकारले छान्दोग्य बृहदारण्यक, कौषीतकी प्रभृति उपनिषद्हरू तथा



# अथ द्वितीय प्रकरणम्

मूल— तत्र प्रथममर्चिः प्राप्य तस्मिन् अर्चिरभिमानिनिपुरुषे किञ्चिद्दूरं गमयति सतिपश्चात् अहः शुक्लपक्षाभिमानिनमुत्तरायणाभिमानिनं सम्वत्सराभिमानिनं वायुं च प्राप्यतैर्मार्गमतिवाहितः सन् 'प्रविश्य च सहस्रांशुं'

---

अनु— अरू धेरै शास्त्रहरूका वर्णन अनुसार अर्चिरादिआतिवाहिक देवताहरू अघि अघि बाटो देखाउँदै जानुहुन्छ र उहाँहरूका पछि पछि उनै मुमुक्षु वैष्णव जानु हुन्छ ।

❀ इत्यर्चिरादिमार्गेसानुवादं प्रथमप्रकरणम् । ❀

# अथ द्वितीय प्रकरण

अर्चिरादिमार्गको बाटो गरी वैकुण्ठजाने वैष्णव पहिला अर्चि अर्थात् अग्निलोकमा पुग्नु भए अग्निको अभिमानी देवता अर्थात् अग्निदेवता अलि टाढासम्म अर्थात् आफ्नो लोकको माथिल्लो सीमासम्म पुऱ्याइ दिनु हुन्छ । त्यसपछि उहाँ क्रमशः दिनाभिमानी, शुक्लपक्षाभिमानी, उत्तरायणाभिमानी र सम्वत्सराभिमानी भन्ने देवताहरूका लोकहरूमा गई वायुदेवताको लोकमा पुग्नु हुन्छ । यी देवताहरू आफ्आफ्ना लोकका माथिल्लो सीमासम्म पुऱ्याइ दिनु

मूल— 'गत्वातिग्मकिरणमण्डलान्तर' इत्युक्तप्रकारेण हिरण्मयकालचक्रप्रवर्तकरथस्य सहस्रांशोर्मण्डलेदुर्निरीक्ष्य निरवधिकतेजोभिः सन्मुखं गच्छन्नन्य आदित्य इव गत्वा तस्य मण्डलं भित्त्वा ततः परं गत्वा क्रमाच्चन्द्रमसं

अनु— हुन्छ । त्यसपछि 'सूर्यमण्डलभित्र प्रवेश गरेर' शास्त्रको यस कथनानुसार कालचक्रप्रवर्तक सुवर्णमयरथ भएको सूर्यमण्डल अगाडि हेर्न नसकिने त्यस्तो असीम तेजोमय अर्को सूर्य जस्तै गएर उनै वैष्णव सूर्यमण्डलभित्र पसेर सूर्यको पारिपट्टि पुग्नु हुन्छ । त्यसपछि अझ माथि ग्रह, नक्षत्र, ताराहरुका निर्वाहक अमृतमय चन्द्रदेवताको चन्द्रलोकमा पुगेपछि चन्द्रदेवता उहाँको सत्कार गर्नु हुन्छ । चन्द्रलोक नाघेर अझ माथि गए अमानव भन्ने विद्युत् अभिमानी देवताको लोकमा पुग्नु हुन्छ । विद्युत्–अभिमानीदेवता वैकुण्ठ जाने वैष्णवलाई बाटो देखाएर उहाँसंग वैकुण्ठसम्म जानु हुन्छ । त्यसपछि सबैलाई तृप्त गराउने जलाधिपति वरुण र त्रिलोकको पालक इन्द्रको लोकमा जानु हुन्छ । यिनी सबै देवताहरू सत्कारपूर्वक उहाँको अत्यन्त प्रशंसा गर्नु हुन्छ । त्यसपछि देवता, असुर, गन्धर्व, यक्ष–राक्षस प्रभृतिका निर्वाहक प्रजापति ब्रह्माको लोकमा पुगी यिनै सबै देवताहरूका लोक नाघेर ब्रह्माण्डको अघिल्लोभन्दा पछिल्लो दशगुण



मूल— प्राप्य इत्युक्तप्रकारेण ग्रहनक्षत्रतारकानिर्वाहकममृतात्मकं चन्द्रमसं प्राप्य तेन सत्कृतस्ततोऽग्रे गत्वा अमानवपुरुषं प्राप्य तेन मार्गं प्रापितः सर्वाप्यायकं वरुणं त्रैलोक्यपालमिन्द्रं मुक्तांश्चगच्छतः प्राप्य तैः सत्का-

अनु— अधिक छन । यस्ता सातवटा आवरण नाघ्नु हुन्छ । यी सप्तावरणको उल्लङ्घन भइसके पछि उनै मुमुक्षु वैष्णव सीमारहित मूलप्रकृतिलाई अतिक्रमण गर्नु हुन्छ । त्यो भन्दा अगाडि बद्ध संसारी भएर रहने बेलामा अन्धकारले ढाकिएको, पानी र छायारहित 'हे महादेव बाटोको विस्तार सुन्दै डराएको छु' यस कथनानुसार सुन्ने बेलामा पनि कम्प उत्पन्न गराउने त्यस्तो क्रूरमार्गमा यमदूतहरुका पाश र स्त्री–पुरुषरूपी पाशद्वारा बद्ध हुने समयमा यमदूतहरू पापीलाई तान्दै लान्छन, कुकुरहरू तिघा टोक्दछन, शक्ति, शंकु, तोमर बाण इत्यादि अस्त्र–शस्त्रले यमदूतहरू ताडनागर्दछन, यमकिङ्कर, बाघ, राक्षस इत्यादिका मुखमा आहार हुनुपर्दछ, शरीरभरमा बोसो रगत बग्दछन, भोक र तृषाले अन्न–जल माग्दा यमदूतहरू नाक, मुख, ओठ, दाँत, हात, खुट्टा भाँच्दिन्छन यस अवस्थामा कराउँदै नरकमा जाँदा जति दुःख भएको थियो ती सबै दुःखहरू निवृत्त

मूल— रेखातिशयंश्लाघ्यमानः सन् सुरासुरगन्धर्वयक्षराक्षसनिर्वाहकं प्रजापतिं च प्राप्य तेषां लोकांश्चातिक्रम्य अण्डं दशोत्तरावरणसप्तकं गत्वानवधिकप्रमाणमूलप्रकृतिंचातिक्रामति । ततः पूर्वं संसारित्वदशायामन्धकाराभृतेनीरन्ध्रायारहिते भीतोऽस्म्यहं महादेव

---

अनु— मई अत्यन्त सुखमात्र दिने अर्चिरादिमार्गको बाटो गरी प्रकृतिको सीमा उल्लङ्घनको आरम्भदेखि अर्चिरादि मार्गमा हेरिरहने सबै देवताहरूद्वारा उनै मुमुक्षु वैष्णव अवर्णनीयसत्कार प्राप्त गर्नु हुन्छ । आफनो उपाय र पाथेयरूपी त्रिलोकलाई नाघ्ने त्रिविक्रम भगवानको चरणकमल सप्तलोकहरूमध्ये ब्रह्मलोक जति छिटो पुगेको थियो उनै वैष्णव त्यत्ति शीघ्रगतिले गएर सिंह, व्याघ्रहरू जस्तो भयाङ्‌बाट निस्किन्छन् त्यस्तै शब्द स्पर्शादि विषयहरू अतिक्रम गरी संसाररूपी महाभयाङ्‌बाट निस्केर सांसारिक तापत्रयरूपी डढेलोभित्र पतनजनित समस्त क्लेशबाट उहाँ मुक्त हुनुहुन्छ। त्यसपछि 'स आगच्छति विरजानदीम्' 'उहाँ विरजानदीमा पुग्नु हुन्छ' उपनिषदको यस उक्ति अनुसार विरजानदीको छेउको प्रदेशमा वहाँ पुग्नु हुन्छ। यो नदी नरकको वैतरणी नदीको विपरीत हो यसमा अमृतरूपी पानी बहन्छ आत्मामा दृढरूपले टाँसिएको प्रकृति सम्बन्ध भन्ने हिलो र



मूल – श्रुत्वा मार्गस्य विस्तरम् इत्युक्तप्रकारेण श्रवणकालेऽपि कम्पजनके क्रूरमार्गे यमभटानां पाशैः पुत्रदारमयपाशैश्च बद्धे यमभटैराकृष्यमाणे अभिरुर्जितैर्भ शक्तिशंकुतोमरसायक शूलादिभिर्बाध्यमाने व्याघ्रकिंकरराक्षसानां मुखस्याहारभूते स्नन्मेदोरक्तसर्वशरीरे क्षुधया

---

अनु– वासनाको धूलोको रेणु जस्तै सूक्ष्म रूपले आत्मामा रहेको सबै प्रकारका वासनाहरूलाई विरजानदीले प्रक्षालन गरी नाश गर्दछ। पाञ्चभौतिक मलीन शरीरमा रहेको हुनाले जीवात्माको स्वरूप तिरोहित हुन्छ र मेघले ढाकिएको सूर्य ग्रहणको दिनमा राहुले ग्रस्त भएको चन्द्रमा र वरिपरि हिलो लागेको मणि जस्तै आत्मा त्यस शरीरबाट निस्किन्छ। 'उसको पानी स्पर्श गर्नासाथ' यस उक्ति अनुसार विरजाको जल स्पर्शमात्र गर्दा जुन् सूक्ष्म शरीर लिएर मुमुक्षु वैष्णव विरजानदीसम्म जानु भयो आत्मस्वरूपलाई तिरोहित गर्ने त्यस सूक्ष्म शरीरलाई छोड्नु हुन्छ र त्यो शरीर नाश भइहाल्दछ । त्यसपछि 'कोटि सूर्यका समान' यस कथनानुसार एकै चोटि उदय भएका कोटि सूर्यका जस्तो दर्शन गर्न नसकिने त्यस्तै उनै मुक्तजीव असीमतेजस्वी भई 'अमानवं समासाद्य'–'अमानव भन्ने भगवानको सन्निधिमा गएर' शास्त्रको यस उक्ति अनुसार शङ्खचक्रधारी चतुर्भुज

मूल— पिपासया च दूतानन्तजले प्रार्थयमाने मग्ननामाप्युत्थोष्ठदन्ते त्रुटितपाणिपादे च सत्याक्रुश्यगच्छति मार्गे जातं दुःखं सर्वं यथानिवर्तत तथाविधेन सुखोत्तरेण मार्गेणैतस्मीमोल्लङ्घनकालमारभ्य पर्यायैः सर्वैरपि सत्कृतः स्वस्योपायभूतपाथेयभूतलोकविक्रान्तचरणकमलवत् सप्तलोकानां मध्ये शीघ्रं ब्रह्मलोकं गतपादवत् शीघ्रगमनेन गत्वा सिंहव्याघ्रादिवत् शब्दस्पर्शादिविषया-

---

अनु— विरजापारि रात्र हुने अमानवनामक भगवानको नजिक जानु हुन्छ र यिनै भगवानले उहाँलाई आफ्ना बाहुद्वारा स्पर्श गर्नासाथ लावण्य सौन्दर्य आदि गुणयुक्त शुद्धसत्त्वमय र भगवानको अनुभवकै परिकर त्यस्तो शरीर पाउनु हुन्छ। यस नवीन अप्राकृत शरीरमा रहेर उनै मुक्तजीव इन्द्रादिदेवताहरूका कर्म साध्य ( साधना गरी जान पाइने ) नाशवान ( प्रलयकालमा नाश हुने ) त्रिगुणात्मक लोकहरूका विपरीत भगवानको प्रीतिले जान पाइने अविनाशी शुद्धसत्त्वमय 'सुख छंदै छैन' यस कथनको विपरीत असीम आनन्दमय अद्वितीय घोर अन्धकारमय जस्तै देखिने विशाल लीलाविभूतिभन्दा विलक्षण अतिविशद रूपले प्रकाशमान भइ रहने सनकादि योगीश्वरहरूका ध्यानको पनि अगोचर भगवानको अनुकूल रहनु नै जसको भोग हो त्यस्ता नित्यसिद्ध पार्षदहरूले परिपूर्ण



मूल— नतिक्रम्य संसाररूपमहागुल्मान्निष्क्रम्य तापत्रयदवदहनान्तः पतनजसमस्तक्लेशान्निवृत्तः ततस्तु विरजातीरप्रदेशं 'स आगच्छति विरजां नदीम्' इत्युक्तप्रकारेण अमृतवाहिनींविरजांप्रतिकोटिभूताम् विरजां सम्यक् प्राप्य दृढपंकं वासनारेणुं च प्रक्षाल्य मेघवृताादित्यमण्डलवत् राहुग्रस्तचन्द्रमण्डलवत् पङ्कदिग्धमाणिक्यवच्च मलिनदेहान्तर्वर्तमानत्वेन तिरोहितस्वस्वरूपोऽयं तस्मान्निवृत्तः 'तत्तोयस्पर्शमात्रेण' इत्युक्तप्रकारेण विरजाजलस्पर्शमात्रेण तिरोधायकसूक्ष्मशरीरस्य निवृत्तत्वेन 'सूर्यकोटिप्रतिकाश' इत्युक्तप्रकारेण अनेकसहस्रादित्यानामेकदोदितत्ववत् निरीक्षणायोग्यो यथानभ्यास्तथा निरवधिकतेजःप्राप्तः सन् अमानवं समासाद्य' इत्युक्तप्रकारेण चतुर्भुजं शङ्खचक्रधरं विरजोत्तरकूलविराजमानामानवसमीपं प्राप्य तेन पाणिभिः स्पृष्टःसन्

---

अनु— उहाँहरूद्वारा पनि सामानिर्देशको अयोग्य, असीम ऐश्वर्य र स्वभावले युक्त श्रीदिव्यदेशलाई (वैकुण्ठलाई) त्यहीं उभी रहेर नेत्रको तृप्ति नभएसम्म दर्शन गरी रहनु हुन्छ। त्यसपछि आकाशं प्रणम्य- 'आकाशलाई प्रणाम गरेर' यस उक्ति अनुसार उनै मुक्तजीव वैकुण्ठलाई प्रणाम गर्नु हुन्छ। विरजाको तीरसम्म सवारी होइ बक्सेको अमानव भन्ने भगवानको वरिपरि शङ्ख, काहली, भेरी इत्यादि बाजाहरूको ध्वनि सुनेर

मूल — पश्चात् सौन्दर्यलावण्यादिकल्याणगुणाकरं शुद्धसत्त्वमयं भगवदनुभवैकपरिकरभूतं विग्रहं प्राप्य इन्द्रादीनामिव कर्मसाध्यं नश्वरं गुणत्रयात्मकं न भवति यत् भगवत्प्रीतिसाध्यं नित्यं शुद्धसत्त्वात्मकं नास्ति सुखमित्युक्तस्तस्य प्रतिकोटिभूतमनवधिकानन्दाद्वितीयदेशभूतमन्धकारावहमहाविभूतिविलक्षणं वैशद्यावहमाकाशं श्रीदेशं सनकादिनां मनसोऽपिदूरगं भगवदानुकूल्यैक भोगैर्नित्यसिद्धैः परिपूर्णैतैरपि परिच्छेत्तुमयोग्येनैश्वर्येण स्वभावेन च युक्तं दिव्यदेशंनेत्रतृप्तिपर्यन्तंस्थित्वा दृष्ट्वा आकाशं प्रणम्य इत्युक्तप्रकारेणप्रणम्य अमानवसमीपे शङ्खकाहलभेरीणां ध्वनिं श्रुत्वा धावन्तिस्खलन्तिपृच्छन्ति आगच्छन्ति अस्मदुपकारकःक्वेतिवदन्ति अद्राक्ष्मअद्राक्ष्मनेत्रयोर्भोग्यं भक्ताः सर्वे आगच्छत इति वदन्ति एवं महाकोलाहलंकृत्वा संघशः संघशोभूत्वा निष्क्रम्यागच्छतां नित्यमुक्तानामानन्दकलकलं दृष्ट्वा अनुभवंकृत्वा महत्या प्रीत्या गमनसमये 'तं पञ्चशतान्यप्सरसां

---

अनु — टाढा–टाढाका पार्षदहरूमध्ये कोही दौडनुहुन्छ, कोही गिर्नु हुन्छ, कोही सोध्नु हुन्छ, कोही आउनु हुन्छ, कोही हाम्रो उपकारक कहाँ हुनुहुन्छ भनी सोध्नु हुन्छ, कोही नेत्रको सुखदाताको दर्शन गरें दर्शन गरें भन्नु हुन्छ, कोही भक्तहरू हो सबै आउनु होस् भन्नु हुन्छ यस प्रकार महाकोलाहल गरेर



मूल— प्रतिधावन्ति' 'तत्रागत्यच ते देवाः साध्याश्चविमलाशयाः' इत्युक्तप्रकारेण दिव्यमालादिव्याञ्जनदिव्यचूर्णदिव्यवस्त्रदिव्याभरण प्रभृतीन्यादाय भूत्वा पञ्चशतान्यप्सरसो नित्यसूरयश्च सम्मुखमागत्य तं 'ब्रह्मालंकारेण ब्रह्मालंक्रिया' इत्युक्तप्रकारेण तमलंकृत्य प्रसादभूतभगवत्परिहितदिव्यवस्त्रदिव्यमाल्यदिव्याभरणदिव्याङ्गराग - प्रभृतिभिरलंकृतमेवंभूतं दृष्ट्वा 'वस्त्रधारणमिदं भूषणधारणमिदं कान्तिमत्वमिदं इदंस्वभावोऽयम्' इति विस्मितहृदयाः श्लाघन्ते। अनन्तरमनेकसहस्रैः पताकै-

---

अनु— आफ्-आफ्ना स्थानबाट निस्केर दल बाँधेर आउने नित्यपार्षदहरूको आनन्दको मधुर शब्द सुनेर त्यसको अनुभव गरेर उनै मुक्तजीव श्री वैकुण्ठनाथ भगवानको समीप असीम आनन्दसंग जाने बेलामा पाँचसय अप्सराहरू उहाँको नजिक आउनुहुन्छ र उनै देवताहरू र विशुद्धमना साध्यहरू त्यहाँ आएर' यस कथनानुसार दिव्यमाला, दिव्य अञ्जन, दिव्यचूर्ण ( अबीर ) दिव्यवस्त्र, दिव्य गहना हातमालिएर पाँच सय अप्सराहरू र अन्य नित्यपार्षदहरू आएर 'ब्रह्मालंकारेण अलंकुर्वन्ति'- 'ब्रह्मालंकारद्वारा अलंकृत गर्नु हुन्छ' उपनिषदको यस कथनानुसार भगवानले धारण गरी बकसेको उहाँको प्रसादी दिव्यवस्त्र, दिव्यमाला, दिव्यगहना, दिव्य अङ्गराग इत्यादिले उनै

मूल— मुक्तादामभिर्वितानैश्चालंकृतं दिव्यस्त्रीपरिवृतं भगवत्सङ्कल्पकल्पितं दिव्यविमानं श्रीगरुडसूरिरानयति । तस्मिन एनमारोप्य स्तुतिं कुर्वन्नतिल्यकान्तारसमीप-

अनु— मुक्तजीवलाई अलङ्कृत गरेर उहाँलाई हेरेर अहो भूषणको शृङ्गार कस्तो राम्रो, वस्त्र धारण कस्तो राम्रो, कस्तो शोभा बढेको छ, यस प्रकारले भगवत्पार्षदहरू आश्चर्य भएर उहाँको प्रशंसा गर्नुहुन्छ । त्यसपछि अनेक हजार पताका र मोतिकोमाला जडेको चंदुवाले अलंकृत, दिव्य आइमाईहरू राज हुनु भएको तथा भगवानको सङ्कल्पले बनेको यस्तो दिव्यविमान श्रीगरुडसूरि ल्याउनु हुन्छ । यस विमानमा मुक्तजीवलाई राखेर उहाँको स्तुति गर्दै तिल्यवनको नजीकसम्म सब कोही जानु हुन्छ । त्यहाँ नाना प्रकारका उपहार हातमा लिएर अर्कै अप्सराहरू मुक्तजीवको सामने स्तुति गर्दै उहाँको सत्कार गर्नुहुन्छ । त्यसपछि तिल्यगन्ध, ब्रह्मगन्ध इत्यादि अप्राकृत दिव्य-सुगन्धहरूको वासना लिएर उनै मुक्तजीव +सर्वगन्ध हुनु हुन्छ । त्यसपछि 'पताकाहरूले अलंकृत गोपुरहरू

टिप्पणि— +सर्वगन्धः, सर्वरसः उपनिषदले परब्रह्म सर्वगन्ध, सर्वरस होइ बस्सिन्छ भनेको छ । किन्तु यसको अभिप्राय खोलेको छैन । विद्वान्हरूले यसको विभिन्न अर्थ गरेका छन् ।



मूल— पर्यन्तंगच्छन्ति । तत्र नानाविधोपहारान गृहीत्वा अन्याः काश्चनाप्सरसोऽभिमुखं स्तुत्वा सत्कुर्वन्ति । अनन्तरं तिल्यगन्धब्रह्मगन्ध प्रभृतीनामप्राकृतगन्धानामाघ्राणंकृत्वा सर्वगन्धः सन् 'पताकालंकृतगोपुराणि सन्निहितानि' इत्युक्तप्रकारेण ध्वजापताकादिभिरलंकृतं दिव्यगोपुरमासाद्य 'श्रीद्वारपालैर्महाकोलाहलेन सत्कृतः इत्युक्तप्रकारेण महतादरेण सत्कृतः 'समतीत्य जनाकुलं कपाटमतीत्यगत्वा' इत्युक्तप्रकारेण नेत्रंचित्तं च बलादाकर्षयन् अयोध्यापराजिता इति कथित श्रीवैकुण्ठमहानगरं कथञ्चित् प्रविश्य श्रीवैकुण्ठदिव्यनगरायनमः इति कृष्णस्य परमाकाशनगरं प्रणमति । तदाः वैकुण्ठामराः मुनयश्च समुद्रजलस्य सह्यपर्वतारोधनवत् संसारस्थोऽयमेतद्देशंप्राप्तः खल्विति

अनु— नजिक आउँछन्' यस कथनानुसार ध्वजा पताकाद्वारा अलंकृत दिव्य ×गोपुरमा मुक्तजीव पुग्नुहुन्छ । 'महाकोलाहलपूर्वक द्वारपालहरू सत्कार गर्नुहुन्छ' यस उक्तिबमोजिम त्यै गोपुरको पहारामा रहने द्वारपालहरू अत्यन्त आदरपूर्वक मुक्तजीवको सत्कार गर्नुहुन्छ । अयोध्यामा श्रद्धालु 'दर्शनार्थी रैतिहरूले

टिप्पणी— × गोपुर बाहिरको ठूलो अग्लो ढोकालाई गोपुर भन्दछन् ।

मूल— विस्मिता एनं प्रशंसन्ति । अनन्तरं वैकुण्ठस्था देवा गरूडविष्वक्सेनप्रभृतयः स्वस्वश्रीगृहं प्रापय्यएनमासने उपवेश्य स्वयमधस्तादुपविष्टाः स्वमहिषीभिर्दीयमानेन-जलेनास्य श्रीपादौ प्रक्षाल्य स्वमहिषीभ्यअस्यतीर्थं दत्वाएतस्य प्रभावं कथयित्वा सत्कारकरणक्रमेण सत्कुर्वन्ति । ततः श्रीशठकोपं दिव्यचूर्णपूर्णकुम्भान् मङ्गलदीपांश्चगृहीत्वादेशान्तरं गत्वा आगतंपुत्रं पश्यन्त्यो

अनु— भरिभराउ भएको ढोका अतिक्रमण गरी' रामायणको यस कथनानुसार मन र नेत्रलाई बलपूर्वक आकर्षण गर्दै उनै मुक्तजीव अयोध्या अपराजिता भन्ने नामले कथित श्रीवैकुण्ठ महानगरभित्र कठिनतासंग प्रवेश गर्नु हुन्छ । त्यसपछि श्रीवैकुण्ठाय दिव्यनगराय नमः भनेर उहाँ कृष्णको परमाकाश भन्ने नामभएको वैकुण्ठनगर-लाई प्रणाम गर्नु हुन्छ । त्यसपछि + अमर र+ मुनि भन्ने दुई थरीका वैकुण्ठवासीहरू संसारको अनादि-बद्धजीवको संसारमुक्त भई हाम्रो नित्यधाममा आइ पुग्नु समुद्रजल सह्यपर्वतमाथि पुग्नु जस्तै आश्चर्य घटना हो भन्ने संझी आश्चर्य भई उहाँको प्रशंसा गर्नु हुन्छ ।

टिप्पणी— + भगवानको दर्शन र गुणहरूका अनुभव गरी रहने पार्षदहरूको नाम मुनि हो तथा भगवानको सेवामा लवलीन हुने पार्षदहरूको नाम अमर हो ।



मूल— मातरइव शीतलमुखाश्चन्द्रवदना योषितः प्रत्युद्गच्छन्ति । अयं च महावीथ्यामन्तः प्रविश्य दिव्यावरणशतसहस्रा-वृतंप्रतप्तकार्तस्वरकृतदिव्यालयं प्राप्य श्रीवैकुण्ठाय दिव्य-विमानाय नमः इति दण्डवत् प्रणामं कृत्वा अभिनव-वर्षेणेव स्वागमनेन अत्यन्तमभिवृद्धै र्दु विवेचपत्रशाखैर्ना-नावर्णैर्नानागन्धैरप्राकृतपुष्पैर्निविडीकृतैर्मकरन्दं प्रव-हद्भिः कल्पवनैर्नानाविधैः पुष्पैः रत्नैश्चकृतैर्लीलामण्डपैः अपूर्ववाद्विस्मयजनकैः क्रीडाशैलैः श्रीवैकुण्ठनाथस्य श्रीमहालक्ष्म्याश्च लीलापरिकरभूतैः श्रवणे अतिरोमाञ्चं यथास्यात्तथाकूजद्भिः शुकसारिकामयूरकोकिलादिभिरा-

अनु— अनन्तर अनन्त गरूड विष्वक्सेन इत्यादि वैकुण्ठनिवासी नित्यपार्षदहरू उनै मुक्तजीवलाई आफ्ना घरमा लगी उच्चासनमा बसाएर आफू तल बस्नु हुन्छ र आफ्ना महिषीहरूद्वारा ल्याइएको पानीले उनै मुक्तजीवको दुई श्रीचरण प्रक्षालन गरेर त्यो पवित्र चरणामृत आफ्ना महिषीहरूलाई दी त्यस चरणामृतको प्रभाव सुनाएर सत्कारको क्रमले उहाँको सत्कार गर्नु हुन्छ । देशान्तर गई आफ्नो घरमा फर्केर आएको पुत्रसंग मिल्ने आमाहरू जस्तै प्रसन्नमुख भएका चन्द्रवदना दिव्यस्त्रीहरू हातमा श्रीशठकोप, दिव्यचूर्ण ( अबीर ), पूर्णकुम्भ, मङ्गलदीप इत्यादि लिएर उहाँसंग भिन्न आउनु हुन्छ । त्यसपछि महामार्गमा गई शतसहस्र

मूल— हुलं माणिक्यमुक्ताप्रवालप्रभृतिरत्नकृतसोपानैर्नित्यमुक्तानां हृदयवत् शीतलैः स्वच्छैरमृतरसैर्दिव्यजलैः पूर्णैः नानाविधपक्षिसंघसमाकीर्णैः सर्वत्र स्रवन्मधुप्रवाहैः स्त्रीणां मुखानि नेत्राणि च धत्ते इत्युक्तप्रकारेण चन्द्रवदनानां योषितां मुखानां नेत्राणां चोपमानभूतैः पद्मसौगन्धिक प्रभृतिभिरप्राकृतैः कुसुमैर्विराजितैर्महातटाकैर्नानापुष्पविरचितैःशयनैः परिमलं वहत्सु पुष्पेषु निविष्टानां मधु-

---

अनु— दिव्य आवरणले घेरिएको र सुवर्णले निर्मित दिव्य मन्दिरमा पुगेर श्रीवैकुण्ठाय दिव्यविमानाय नमः भनी उस मन्दिरलाई दण्डवत् प्रणाम गर्नु हुन्छ। श्रीवैकुण्ठ नाथ भगवान विराजमानहुने श्रीमहामणिमण्डपको वरिपरि दिव्य उद्यान ( बगैचा ) हरू छन्। नयाँ वर्षातको पानीले वृद्धि प्राप्त जस्तै उनै मुक्तजीवको आगमनले वृद्धि प्राप्त ती ठूला ठूला उद्यानहरूका बीचमा कल्पवृक्षका वनहरूपनि छन्। ती वनहरू यी कस्ता हुन् त्यो जान्न नसकिने त्यस्ता पत्र र हाङ्गा तथा नानाप्रकारका वर्ण र सुगन्धले युक्त पुष्पले पूर्ण छन्। मकरन्द रस वर्षा रहेको छ। त्यस्ता फूल र रत्नले बनेका लीलामण्डप ( लीलाको निमित्त बनेका मण्डप ) हरू तथा लक्ष्मी र नारायणका क्रीडाको निमित्त बनाएका अपूर्व विस्मयजनक नकली



मूल— प्रवाहमग्नानां गानानुमेयानां देवभ्रमराणां दिव्यगान्धर्वेण प्रचुन्मादयद्भिर्दिव्योद्यानशतसहस्रैरावृतं नानारत्नविचित्रतस्थले अनेकसहस्ररत्नस्तम्भैरलंकृतम् उभयविभूतिस्था अपि यथैकदेशस्यैव पर्याप्ताः स्युस्तथाविधावकाशयुक्तं पद्मसौगन्धिकचन्दनागरुकर्पूरप्रभृतीनि-गृहीत्वा गच्छता मन्दानिलेन सेव्यमानं निरतिशयान-

---

अनु— पर्वतहरू पनि छन्। सुन्दा शरीरमा रोमाञ्च पैदा गराउने त्यस्तो मधुर स्वरले कराइ रहेका सुगा, मैना, मयूर, कोकिल इत्यादि पक्षीहरूले ती कल्पवनहरू भरपूर छन्। त्यहाँ बीचबीचमा विशाल पोखरीहरू छन्। यसमा ओर्लिनलाई माणिक्य मुक्ता मूङ्गा इत्यादि रत्नले बनेका सीढीहरू छन्, नित्यमुक्त पार्षदहरूका हृदय सरह शीतल र स्वच्छ अमृतरूपी दिव्य जलले ती पोखरीहरू परिपूर्णरहन्छन्, त्यहाँ नाना प्रकारका जल-चर, पक्षीहरू विहार गर्दछन्, चन्द्रवदना आइमाईहरूका मुख र नेत्रका उपमा हुने त्यस्ता पद्म सौगन्धिक प्रभृति अप्राकृत दिव्य पुष्पहरू त्यस पानीमा छन्। ठाउँ ठाउँमा नानाप्रकारका फूलले बनेका शयनस्थलहरू छन्, वरिपरिबाट सुगन्ध आइरहेका फूलहरूमा बसिरहेर मदको प्रवाहमध्ये मग्न भइरहेका तथा गानमात्र सुनेर अनुमानगरिने देव

मूल — न्दमयं श्रीमहामणिमण्डपं प्राप्य "आनन्दमयाय मण्डपरत्नाय नमः" इतिदण्डवत् प्रणमति । तत्र सर्वस्मात् परस्य मूलभूतस्य महामृतस्य सततास्वादनादभिवृद्धा वैकुण्ठनाथेन साम्यापन्ना भगवदनुभवजनितेन हर्षेण सामगानं कुर्वन्ति । श्रीमद्वचः कवयः प्राणं रचन्तो दास्यंकुरुत इति आनन्दनद्यां शीलगुणरूपागाधःस्थले·

---

अनु — भ्रमर भन्ने भ्रमरहरूको देवगान श्रवणगर्दा उन्माद जस्तै हुनु पर्दछ त्यस्ता सहस्र उद्यानहरूका बीचमा आनन्दमयमण्डप भन्ने मण्डप छ । यसको भुई नाना प्रकार रत्ने बनेको हुनाले अति विचित्र देखिन्छ र यो मण्डप रत्नले निर्मित अनेकहजारस्तम्भले शोभित छ । यसको एक अंश उभयविभूतिमा रहने नित्य, मुक्त र बद्ध सबै जीवात्माहरू रहनलाई पर्याप्त यस्तो विशाल मण्डप छ । जहाँ त्यहाँबाट पद्म, सौगन्धिक, श्रीखण्ड, अगरु, कर्पूर इत्यादिको सुगन्ध लिएर मन्द मन्द पवन आइरहेको छ । यस्तो अवधि रहित आनन्दमय महामणिमण्डपमा उनै मुक्तजीव सवारीमई 'आनन्दमयाय मण्डपरत्नाय नमः' भनी मणिमण्डपलाई दण्डवत् प्रणाम गर्नुहुन्छ । त्यस मण्डपमा सर्वश्रेष्ठ सर्वकारणकारण महा अमृतरूपी परमब्रह्मको सदा सर्वदा अनुभव गर्दैर वृद्धि प्राप्तगर्नु



मूल — चिह्नयष्टिं स्थापयन्ति । केचित् स्वाचार्यं प्रति आभरणविशिष्टस्य श्रीमत्पुण्डरीकाक्षस्य उपकारकस्य स्थितिं प्रादर्शय इति वदन्ति, केचित् सम्बन्धिदास्यंकृत्वा त्वच्चरणौ लब्धवानहमितः परमपिइदमेवममस्याद् इति वदन्ति, केचित् नमो नारायणाय इति वदन्ति इति चोक्तप्रकारेण निरन्तरं वक्तव्यं श्रीमन्त्रं वदन्त आत्मसमर्पणं कुर्वन्ति । उरुकुमालुरदशके पराङ्कुशवद् प्रवलपापं मां बाधमाणैर्गुणैर्युक्ते इत्याद्युक्तप्रकारेण अधिकदासपरसेन 'नमः इत्येव वादिनः' नमः शब्दं

---

अनु— भएका तथा परब्रह्मको समता प्राप्त नित्यमुक्त पार्षदहरू भगवानको अनुभवजनित हर्षले सामवेद गान गर्नुहुन्छ । मधुर बोली बोल्ने कविहरू हो आफूलाई बचाएर भगवानको सेवा गर्नुहोस् भनेर वहाँहरू भगवानको शील र गुणरूपी अगाध (गहीरो) स्थलमा चिह्न यष्टि गाड्नु हुन्छ ! कोही आफ्नो आचार्यको दर्शन गरेर अलङ्कारले शृङ्गारगरी बक्सेको हाम्रो उपकारक श्रीमान् पुण्डरीकाक्ष भगवानको स्थितिको दर्शन दिलाइ बक्स्यो भन्नुहुन्छ । कोही गुरुको सम्बन्धीको दास भएर हजुरको चरण मैले पाएं यही चरण पछि पनि सदाकालकालागि मलाई चाहिएको छ भन्नु हुन्छ । कोही नमो नारायणाय भन्ने मन्त्र उच्चारण गर्नु हुन्छ । कोही निरन्तर उच्चारण गरिने योग्य श्रीमन्त्र

मूल— प्रयुञ्जते इत्युक्तप्रकारेण नमः शब्दं वदन्ति । प्रलयजलधाविव आनन्दसागरेऽभ्रमद्भिर्नित्यमुक्तैरुच्यमानानि श्रोत्रप्रियाणिवचांसि क्रूरवाक्यपुरुषोक्तक्रूरवचः श्रवणजदुःखजातं यथानिवर्तेत तथा श्रोत्रगोचरान् कुर्वन् गत्वा दिव्यस्थानं प्राप्य तस्मिन् महासदसि मध्ये स्वस्वमस्तक धृतदिव्यायुधेषु साञ्जलिबन्धेषु अस्त्ररूपेषु

अनु— उच्चारणगरी आत्मसमर्पण गर्नु हुन्छ । सहस्रगीतिको उरुकुमालूरदशकमा श्रीशठकोपआल्वार जस्तै प्रबल पापी मलाई पापले बाधक गुणमा लगाउँछ इत्यादि कथनानुसार अत्यन्त दास भावमा आनन्द पाउनुभएकोले नमःइत्येव वादिनः-नमः यतिमात्रभनिरहने इत्यादि कथनानुसार नमोनमः भनिरहनु हुन्छ । प्रलय समुद्रमा हुन्नु जस्तै आनन्दसागरमा घुमी रहने नित्यमुक्तहरूका मुखबाट निसृतः भएका तथा कानलाई आनन्द दिने वचनहरू उनै मुक्तजीव सुन्नु हुन्छ । [अघी क्रूर वचन बोल्ने क्रूर मानिसहरूका क्रूरवचन सुनेर अति दुःख भएको थियो अहिले वैकुण्ठवासीहरूका यी मधुर वचन सुन्दा अघिका ती सबैदुःख नाश भइहाल्दछन् । त्यसपछि पार्षदहरूको मधुर वचन सुन्दै उनै मुक्तजीव दिव्य स्थानमा ( श्रीमहामणिमण्डपमा भगवान राज हुने स्थानमा ) जानु हुन्छ । त्यहाँ विशाल सभाको



मूल— दिव्यपुरुषेषु स्वसङ्कल्पकृतसकलजगत्सृष्टिस्थितिसंहारसेनेशप्रभृतिदिव्यपुरुषेषु च यथाक्रमं प्रणम्य स्थितेष्वयं पश्यति ।

❀ इत्यर्चिरादिमार्गे द्वितीय प्रकरणम् । ❀

अनु— बीचमा आफ्—आफ्ना शिरमा शङ्खचक्र इत्यादि एउटा एउटा अस्त्र चिह्नकोरूपले धारणगरेर पराक्रमको दुईतिर उहाँलाई घेरेर नित्यपार्षद दिव्यपुरुषहरू हात जोडेर उभीरहनु हुन्छ । जसको शिरमा जुन अस्त्र छ त्यै अस्त्रको नाम अनुसार उहाँको पनि त्यै नाम हो । उहाँहरू आफ्ना सङ्कल्पले समस्त जगतको सृष्टि, स्थिति र संहार गर्न सक्नु हुन्छ । उनै मुक्तजीव उनै विष्वक्सेन प्रभृति नित्यपार्षद दिव्यपुरुषहरूलाई क्रमशः प्रणामगरेर सबैलाई दर्शन गर्नु हुन्छ ।

❀ इत्यर्चिरादिमार्गेसानुवादं द्वितीय प्रकरणम् । ❀

# अथ तृतीय प्रकरणम्

मूल— उभयविभूतिविभाजकशेषित्वप्रकाशके सर्वाश्चर्यमये महाप्रभावे श्रीमत्युत्तमसिंहासने द्वादशदलस्य नानाशक्तिमयस्य दिव्यकमलस्य कर्णिकायां पुष्पसंचयविचित्रिते दिव्ययोगपर्यङ्के उपरि अनेकसहस्रचन्द्रनिर्मितेनेव शीतलकान्तियुक्तेन दिव्यविग्रहेण युक्तेकल्याणगुणगणानन्त्यात् सर्वविधकैङ्कर्येष्वधिकृततया कैङ्कर्यपराणां सर्वेषामपि प्रधानभूतत्वाच्च अनन्त इति शेष इति च नामधेययुक्ते

# अथ तृतीय प्रकरण

अनु— त्यस महामणिमण्डपमा उभयविभूतिको विभाग गर्ने शेषित्वको प्रकाशक सर्वाश्चर्यमय महाप्रभावशाली अति सुन्दर उत्तम सिंहासन छ। यस सिंहासन माथि नानाशक्तिमय द्वादशदल भएको दिव्यकमल छ। यस कमलको कर्णिकामा ( बीचको भागमा ) फूलहरूका समूहले विचित्र देखिएको योगपर्यङ्क भन्ने दिव्य पलङ्ग छ। यस पलङ्गमाथि शीतलकान्तियुक्त गोरोशरीरयुक्त तथा सिंहासनको आकारधारण गर्ने सहस्रफणायुक्त शेषनाग हुनुहुन्छ। उहाँको सहस्रफणाहरूका हरेक फणामाथि एउटा उज्ज्वल



मूल — भगवदनुभवानुकूल्यार्थमनेकमुखविशिष्टे ज्ञानबलयोः शैत्यमार्दवसौरभ्यादिगुणानां चाकरभूते श्रीमत्यनन्तशयने रजतगिरिशिखरोदितानेकसहस्रादित्यसदृशफणामण्डलज्योतिर्मण्डलमध्ये पति विश्वस्येत्युक्तभगवत्पूर्यतिशयितपूर्त्यां सौरभावहस्पृहणीयकेशेत्युक्तप्रकारेण सौरभमपि वासयत्केशायां स्वभोग्यैकदेशनिमग्नपुण्डरीकलोचनायां भोगैकान्तालंकारसदृशबाल्यमध्याविर्भूतयौवनायां वचः संमर्देनापिम्लायमानसौकुमार्यायां भ्रान्त पुष्पवासिन्याम् इत्युक्तप्रकारेण अन्यत्रेव परिच्छिद्य विनियोगानर्हताभोग्यताप्रकर्षायां भोगोपोद्घातकेलीचुलुकितभगवद्वैश्वरूप्यप्रभावायां दिव्यपरिजनानां तत्तदवस्थानुरूपदिव्यपरिचर्यायामाज्ञापयन्त्यां सर्वदा

अनु— दिव्यमणि हुनाले उहाँका शरीर अनेकहजार चन्द्रमाले बनेको हो जस्तै देखिन्छ। उहाँ अनन्तकल्याण गुणले युक्त तथा भगवानका सर्व प्रकार कैङ्कर्यको अधिकार प्राप्तहुनाले कैङ्कर्य यथायथ समस्त पार्षदहरूमध्ये प्रधान हुनुहुन्छ र उहाँका शेष र अनन्त भन्ने नाम छन्। भगवानको अनुभवको अनुकूलताका लागि उहाँका अनेक मुख छन्। उहाँ ज्ञान, बल शीतलता सुगन्ध, कोमलता आदि गुणहरूका खानि हुनुहुन्छ। यस्तो अनन्त शय्यामा चाँदिको पहाडमाथि अनेक हजार सूर्यका उदय जस्तै उनै शेषजीका फणामण्डलको वरिपरि ज्योतिर्मण्डलको बीचमा 'पति विश्वस्य' उपनिषद्को यस कथनानुसार सम्पूर्ण विश्वको पति परब्रह्म

मूल— सर्वात्मनामपाश्रयभूतायां शीलगुणविलासादिभिः स्वसदृशायां श्रीमत्पुष्पवासिन्यां महालक्ष्म्यां दक्षिणपार्श्वस्थायां ततोऽप्यधिकं क्षमागुणयोरनिर्वचनीयसौन्दर्ययोस्तच्छायासदृशयोरन्योर्द्वयोर्वामपार्श्वस्थयोर्मध्ये विद्युत्त्रयमध्यगतदलदरविन्दकालमेघं रजतगिरिसमवस्थितमिव तवमुखकान्तिःकिरीटकान्तिरूपेण व्याप्ता किम्

---

अनु— नारायण विराजमान होइ बक्सिन्छ। उहाँको दाक्षिण भागमा शेषशय्यामा महालक्ष्मी राज होइबक्सिन्छ। भगवान शब्दमध्ये भगशब्दद्वारा भगवानको जो गुण पूर्ति जानिन्छ त्यस पूर्तिको हेतु महालक्ष्मी होइ बक्सिन्छ। 'सुगन्धयुक्त स्पृहणीयकेश' यस कथनानुसार सुगन्धलाई पनि सुगन्धित गराउने अर्थात् अत्यन्त अधिक सुगन्धयुक्त महालक्ष्मीको केश हो। भगवानको भोग्य आफ्नो शरीरको एक शरीरको एक अंशको अनुभव गरेर पुण्डरीकाक्ष भगवानको दुई कमलनयन त्यै अनुभवमा निमग्नभइहान्दछन्। शरीरमा धारण गरेर आनन्दित हुनलाई बनेका गहना जस्तै बाल्यावस्थाको बीचैमा प्रकट भएको यौवनावस्था जस्तै उहाँको अवस्था रहन्छ। केवल कुरा गर्दै उहाँको सुकुमारताम्लान भइहान्दछ ।- महालक्ष्मी त्यस्तो सुकुमारी हुनुहुन्छ। 'महालक्ष्मीसंग विहारगर्दा हजुर मोहित होइ बक्सिन्छ' यस कथनानुसार अरू अरूले



मूल— इत्युक्तप्रकारेण ऊर्ध्वंव्याप्तमिव श्रीमुखमण्डलतेजःप्रवाहमुभयविभूतिनिर्वाहकत्वपिशुनं स्वकान्त्यवगुण्ठित सर्वकान्तिश्रीमत्किरीटं पश्यतां मनः नेत्रे च व्यामोहयन्निविद्धवर्तुलमष्टमीचन्द्रे पतन्तीममृतधारामिव श्रीमल्ललाटे समर्पितं श्रीमत्तिलकमाच्छादयत्प्रकाशमयचन्द्रमण्डलकुटिलं सपुष्पतुलसीपरिमलवासितं नीलशीतलनिबिडकेशं सौकुमार्यातिशयेनेषत्प्रस्विन्नवल्लदयमाणं स्नेहिन उन्मादयल्ललाटं प्रफुल्लशीतलतामरसयुगलमा-

---

अनु— विहार गर्दा नानाप्रकारका विनियोगका जस्तो सीमा निर्देश गर्न सकिन्छ भगवानले महालक्ष्मीसंग विहारगर्दा विनियोगको सीमा निर्देशको योग्यता नै रहँदैन महालक्ष्मीको भोग्यतामा त्यस्तो श्रेष्ठता छ। भोगको आरम्भरूपी लीलामा महालक्ष्मीले भगवानको विश्वरूप सम्बन्धी प्रभावलाई आफ्नो चुलुकमा राखिबक्सिन्छ। भगवानका अनादि दिव्य परिजनहरूलाई महालक्ष्मीले विभिन्न अवस्थाको योग्य सेवाको निमित्त आज्ञा दी बक्सिन्छ। उहाँ नित्य, मुक्त र बद्ध भन्ने सबै जीवात्माहरूको सर्वदा आश्रय तथा शील, गुण, विलास इत्यादिले उहाँ भगवानको अत्यन्त सदृश होइबक्सिन्छ। यस्तो महालक्ष्मी शेषशय्यामा भगवानको दक्षिण भागमा

मूल — क्रमथ नृत्यद्भ्रमरेखे इव स्वशार्ङ्गवत् सुन्दरभ्रूलते संश्लिष्य वियुक्तानां मृत्यू अन्यान् मातृवद्गोपायती चेतनविषये वात्सल्येन महालक्ष्मीसतताऽवलोकनेनोमय विभूत्यैश्वर्येण च वर्तते। पतिं विश्वस्य इति प्रमाणनिरपेक्षं सर्वलोकनाथमरविन्दलोचनम् इत्युक्तप्रकारेण सर्वेश्वरत्व-लिङ्गं सौंदर्यान्तरानुभवाशां प्रतिरुध्य स्वैकपरान् कुर्वती कमलनयनो नित्यसूरिभिः स्तूयमानो नायकः इत्युक्त-प्रकारेण त्रिपाद्विभूतिं स्ववशेकृत्वा आक्रोशयती शीतलकान्तिमती श्रीरङ्गशायिनेत्रवन्नीलविशालपूफुल्ले

---

अनु — राज गरिबक्सिन्छ। महालक्ष्मीभन्दा अधिक क्षमा, गुणयुक्त र अनिर्वचनीय सौन्दर्यवती तथा महालक्ष्मीको छाया जस्तै भूदेवी र नीलादेवी भन्ने अरू दुई जना प्रधान महिषीहरू शेषशय्यामा भगवानको वाम भागमा राज गरी बक्सिन्छ। उहाँहरूको रूप तीनवटा बिजुलीका बीचमा चाँदिको पाहाडमाथि तुरुन्त फुलेको नील कमल र कालमेघ जस्तै देखिन्छ। 'हजुरको मुखको कान्ति माथितिर फैलिएर किरीटको कान्ति भएको छ कि' श्रीशठकोप आल्वारको यस कथनानुसार माथितिर व्याप्त भएको होकि जस्तै देखिएको तथा वैकुण्ठनाथ भगवान नै उभयविभूतिको निर्वाहक होइबक्सिन्छ भनी बनाउने तथा आफ्नो



मूल — त्रिसृमरभ्रक्तरेखे श्रीमदरविन्दायते मिथो बद्धस्पर्धस्फुरि-तशफरद्वन्द्वलालिते सुन्दरपरिपदुन्थानानन्तरं लक्ष्यभूत-दौत्यकृन्नेत्रे कल्पतरोर्लता वा पल्लवं वेति नित्यसंशयो-त्पादिकां सुन्दरदीर्घनासालतां तत्पल्लवोल्लासावित्र दिव्यकपोलौ तत्कुसुममिव पूर्णचन्द्रिकावर्धकपूर्ण-चन्द्रमिव श्रीमुखकान्तिप्रवहद्स्मितं सुन्दरनिविड-प्रवालखण्डमिव वचनपर्यन्तगमनं निरुध्यप्रथमत एवा-गाधायां नद्यां मध्येऽन्यतापहद् वङ्कगवदनुभवपरिकरं

---

अनु — तेजले अन्य सबै तेजलाई मलिन गराउने त्यस्तो तेजोमय किरीट भगवानको शिरमा छ। दर्शकभक्त-हरूका मन र नेत्रलाई मोहित गराउने र अष्टमी तिथिको अत्यन्त गोल चन्द्रमण्डलमा गिरीरहेको अमृतधारा जस्तै अति सुन्दर ललाटमा समर्पित मनोहर तिलक छ। यस तिलकलाई अलिअलि ढाकेको छ जस्तै प्रकाशमय चन्द्रमा सरह कुटिल तथा मञ्जरिसमेत तुलसीको वासनाले सुगन्धितभएको शीतल नील सघन केश छ। भगवानको शरीर अत्यन्त अधिक सुकुमार हुनाले अलि अलि पसीना आएको छ जस्तै देखिएको र प्रेमी भक्तहरूलाई उन्माद बनाउने त्यस्तो सुन्दर ललाट भगवानको छ। दुइटा फुलेका शीतल कमलमाथि नाचीरहेका दुईवटा रेखाहरू जस्तै देखिने र

मूल— मनोऽपहृत्याक्रोशयन्तं कपटकार्योक्त्या करभूतं श्रीमदधरं स्फुरच्चलन्मकरकुण्डल इत्युक्तप्रकारेण प्रीत्यतिशयेन शिरः कम्पकरणाच्चले दिगन्तरेषु तेजस्तरङ्गयती लावण्यसागरेकलयती विद्योतन्महामणिमयमकरकुण्डले कान्ति शैत्यमार्दवसौरभ्यादिगुणैः तेजोमण्डलेनावृतम् इत्युक्तप्रकारेण सकलकलापूर्णं सर्वाह्लादकरं चन्द्रमण्डलं तत्क्षणोन्मीलितसरसिजं तिरस्कुर्वत् समीपस्थानुन्मादयत् मज्ञान-

अनु— आफ्नो शार्ङ्ग धनुष जस्तै अतिसुन्दर तथा दुईटा लता सदृश रमणीय आँखीभौं छन् । पहिला सम्मिलित भएर पछि विछोड हुनु परेका भक्तहरूको मृत्युसमान र अन्य भक्तहरूलाई आमा सरह रक्षा गर्ने, सबै चेतनप्रति वात्सल्य गुणयुक्त तथा महालक्ष्मीको दृष्टि हरहमेशा परेकोहुनाले उभयविभूतिका ऐश्वर्यवान दुई नेत्र छन् । पतिं विश्वस्य– विश्वको पतिलाई उपनिषद्को यो प्रमाण चाहिएको छैन, सर्वलोककानाथ अरविन्दलोचनलाई यसउक्ति अनुसार भगवानका दुई नेत्रले भगवाननै सर्वेश्वर होइबक्सिन्छ भन्ने स्वतः जनाइदिन्छन् र अर्को सौन्दर्यको अनुभव गर्ने आशालाई रोकेर भक्तहरूलाई आफ्नै अनुभवमा लीन गराउँछन् । 'नित्यसूरिहरूद्वारा स्तुतिगरिएको र उहाँहरूका पनि नायक कमलनयन' यस कथनानुसार त्रिपाद्विभूतिलाई आफ्नो वशमा ल्याएर सबैलाई बोलाइ



मूल— मुत्पाद्य मोहयन् मायावन्मन्त्र इत्युक्तं सुन्दरवदनं दिव्यमहिषीणां हस्ताभरणैर्मुद्रितं क्रमुकतरुणग्रीवां कम्बुप्रतिमं कण्ठं देवीनां कर्णकुसुमैः कर्णभूषणैर्विकसित

अनु— बक्सिने जस्तै, शीतलकान्तियुक्त, श्रीरङ्गनाथ भगवानको दुई विशाल नीलनेत्रका समान रातो रेखा भएका तथा फैलिएका सुन्दर दुई विशाल कमल जस्तै, परस्पर विवाद गर्ने दुइटा माछा जस्तै मनोहर देखिने, वैकुण्ठसभा विसर्ज भइसकेपछि विहारकालागि इङ्गितद्वारा एकान्तमा बोलाउन दूत जस्तै भगवानका दुई नेत्र छन् । यो कल्पवृक्षको लहरा हो कि पात हो भन्ने नित्यसंशय उत्पादन गराउने भगवानको लहरा जस्तै दीर्घनासिका छ । त्यै लहरामा उम्रेका दुइटा पात जस्तै उहाँका दुई सुन्दर गाला छन् । ती दुइटा गालामा फुलेका नयाँ फूल जस्तै र जुनलाई अझ वृद्धि गर्ने पूर्णचन्द्र सदृश तथा वरिपरिबाट बगेर एकत्रितभएको मुखकान्तिजस्तै भगवानको मन्द हास्य छ । सुन्दर पुष्ट मुक्ताको खण्ड जस्तै वचन पर्यन्त गमनलाई रोकेर अर्थात् बोल्न नदिएर शुरूमै अगाधनदीको बीचमा तापहरण गर्ने जस्तै भगवानको अनुभवको साधनरूपी तथा मनलाई हरणगरी कपट-कार्य र त्यस्तै वचनकोआकर अति मनोहर अधर

मूल— श्रीमत्केसपाशैश्च जायमानेन संमर्देन 'सीतायाः शोभितम्' इत्युक्तप्रकारेण अलंकृतान् उभयत्र निघृष्य स्थापितान् मरकतगिरीनिव दृढान् विभूतिद्वयमपिस्वच्छायायां

---

अनु — छ । स्फुरच्चलन्मकरकुण्डले यस कथनानुसार अत्यन्त प्रीतिले गर्दा भगवानको मस्तक हल्लीरहेकोले मकरको आकारका दुई कुण्डलपनि हल्लिन्छन् र तिनको तेज सबै दिगन्तरमा फैलिएको हुनाले दुईटा लावण्यसागरको याददिलाउने भगवानको अत्यन्त उज्ज्वल महामणिमय दुई मकरकुण्डल छन् । कान्ति, शीतलता, कोमलता, सुगन्ध इत्यादि गुणहरूद्वारा र तेजोमण्डलले ढाकिएको यस कथनानुसार सोलह कलाले पूर्ण, सबैलाई आनन्ददिने चन्द्रमण्डल र तुरुन्त फुलेको कमलको शोभालाई तिरस्कार गर्ने, नजिक रहने भक्तहरूलाई उन्माद जस्तै बनाउने र अज्ञान उत्पन्न गरेर मोहित गराउने तथा मायाको प्रभाव भएको मन्त्र हो यस्तो कथित भएको भगवानको सुन्दर वदन (मुख) छ । दिव्यमहिषी श्रीदेवी, भूदेवी र नीलादेवीका हातका गहनाहरूका डाम बसेको र सुपारीको तरुण रूख जस्तै, भगवानको ग्रीवा तथा दक्षिणावर्तशङ्ख जस्तै तीन रेखा भएको उहाँको कण्ठ छ । उनै देवीहरूका कानका फूल, कानका अरू गहनाहरू र भृङ्गार



मूल — कृत्वारक्षितुं समर्थान् दुर्गान्तर्वर्तिन इव स्वाश्रितान् संसारस्थानपि निर्भयान् कुर्वतः स्वस्योभयविभूतिप्रदान् दिव्यास्त्रपुष्पितान् कल्पवनानीव सुन्दरानेकभुजान् श्रीमहालक्ष्म्यामन्दिरं नित्यमनुभूयमानमपि क्षणमपि विश्लेषं न सहामीतितामुन्मादयत् तच्चरणार्पितलाक्षारसेन श्रीभूमिदेवी कुचकुङ्कुमद्रवेण चालंकृतं वनमालाविराजितं श्रियो हिरण्यप्राकारभूतं सुन्दरमहामणिमयहारमुक्तादामकौस्तुभप्रभृतिश्रीमन्महारत्नाभरणानां प्र-

---

अनु — गरिएको केशको मर्दनद्वारा 'सीताद्वारा शोभित भएको' श्रीरामायणको यस उक्ति अनुसार अलङ्कृत भएका दुवैतर्फ कसिलाएका चारवटा मरकतमणिका पाहाड जस्तै दृढ, दुवै विभूतिलाई आफ्ना छायामा राखि रक्षागर्न समर्थ, दुर्गमध्ये बसेकालाई जस्तै आफ्ना आश्रित संसारीजीवहरूलाई पनि निर्भय गराउने, आफ्ना दुवै विभूति भक्तलाई दानदिने, हरियो कोपिलाको छेउमा फुलेकाफूलजस्तै हातमा शङ्खचक्र आदि दिव्यास्त्र धारण गर्ने र त्यस्ता दिव्यास्त्ररूपी फूलहरूले शोभित कल्पवन जस्तै अत्यन्त सुन्दर भगवानका अनेक बाहुहरू छन् । स्थिर भएर बस्न महालक्ष्मीको मन्दिर जस्तै, महालक्ष्मीले नित्य अनुभवगरिबक्सेतापनि उहाँले एकक्षणलाई विरह

मूल— काशभूमि सुन्दरं, श्रीमद्वक्षः कालमेघे विद्युल्लतावत् परभागरसावहं सौन्दर्यप्रवाहसेतुमिव श्रीमद्यज्ञोपवीतम् 'अन्तर्निरन्तरं संचरति' इत्युक्तप्रकारेण नित्यमुक्तानां हृदयेषु लीलासंचारं कुर्वच्छ्रीमदुदरबन्धनं सौन्दर्यसागरावर्तवन्मनोभ्रामयदुदरं श्रीपाञ्चजन्यसुदर्शने चन्द्रसूर्यौ मत्वा मुकुलितविकसितं विधिशिवनिदानं नाभिपद्मं सूक्ष्ममध्यं सन्ध्यारागरञ्जिताकाशमिव मध्यतरुकुसुममिवावलग्नपरभागरसावहं श्रीपीताम्बरं रम्भास्तम्भगम्भीरमूरुयुगलं कमलनालवत्कण्टकिते श्रीमज्जङ्घे

अनु— सहन गर्न नसक्ने त्यस प्रकारले महालक्ष्मीलाई पनि उन्माद सरह बनाउने, महालक्ष्मीको चरणको माहुरिको रस र भूदेवीको स्तनको कुङ्कुमको उवटनले अलङ्कृत, वनमालाले सुशोभित, महालक्ष्मीको निमित्त सुनको पर्खाल जस्तै, सुन्दर महामणिको हार मोतीका माला कौस्तुभ प्रभृति महारत्नहरूले निर्मित दिव्य अलङ्कारहरूका प्रकाशकोस्थान त्यस्तो अतिरमणीय वक्षःस्थल छ। कालमेघमा विजुलीको लहरा जस्तै +परभागशोभाको आनन्द दिने, तथा सौन्दर्यको

टिप्पणी— +परभाग शोभाः—रातोको छेउमा नील, नीलको छेउमा हरियो यस प्रकारले एउटा रंगको छेउमा अर्को रंग हुनाले सब मिलेर जो शोभा देखिन्छ त्यसको नाम परभाग शोभा हो।



मूल शङ्खरथाङ्गकल्पकध्वजारविन्दाङ्कुशवज्रलाञ्छनौ देवीभिरपि सभयं स्पर्शनीयौ अतिमृदुलौ नित्यभोग्यौ दुःखनिवर्तकतेजोमयचरणौ लावण्यसागरतरङ्गश्रेणीमिवाङ्गुलीस्तत्रोदिताश्चन्द्रानिव नखान् पुंसोऽपि स्त्रीवस्त्रं

अनु— प्रवाहमा बनेको सेतु जस्तै भगवानको सुन्दर यज्ञोपवीत छ। हृदयभित्र निरन्तर सञ्चार गरीबस्छिन्छ। यस कथनानुसार नित्यमुक्त पार्षदहरूका हृदयमा लीला पूर्वक सञ्चार गरीरहने सुन्दर उदरबन्धन शोभित छ। सौन्दर्यसागरको आवर्त (भ्रमरी) जस्तै मनलाई घुमाउने भगवानको सुन्दर उदर छ। श्रीपाञ्चजन्यशङ्ख र श्रीसुदर्शनचक्रलाई चन्द्रमा र सूर्य संझेर +मुकुलित र विकसित× हुने भगवानको नाभिपद्म छ। यही ×नाभिपद्म शिवजी र ब्रह्माको उत्पत्तिको कारण हो। भगवानको कम्मर पातलो छ। संध्याकालमा गुलाबी

टिप्पणी— +सायंकालमा पद्ममुकुलित र प्रातःकालमा विकसित हुन्छ। त्यस कारण यस्तो उत्प्रेक्षा गरियो।

×भगवानको नाभिपद्मबाट ब्रह्माको जन्म भएको छ। त्यस कारण यो नाभिपद्म ब्रह्माको साक्षात् उत्पत्ति स्थान हो। ब्रह्माको क्रोधबाट शिवजीको जन्म भएको छ। यो पनि भागवत आदि पुराणहरूमा प्रसिद्ध छ। त्यस कारण भगवानको नाभिपद्म परम्पराद्वारा शिवजीको पनि उत्पत्ति स्थान हो।

मूल — धारयन्तं बन्धुभिः सम्बन्धं त्यक्त्वा लोकैः प्रद्वेशं त्यक्त्वा परमाकाशस्थं देवोपकारकं प्रतिमण्डलव्यापारं कुर्यामित्युक्तप्रकारेण दर्शनसमय एव समस्तक्लेशापहं नेत्रयोः पुलकावहं निविडशीतलं साम्यापन्नानां सूरीणां

अनु— रंगले रंगीएको आकाश जस्तो तथा वृक्षको बीचमा फुलेको फूल जस्तो भगवानको शरीरको मध्यभाग-स्थित परभाग शोभाको आनन्द दिने उहाँको पीताम्बर छ । भगवानका दुई उरु कदली स्तम्भ जस्तै लामा-गोल र पुष्ट छन् । भगवानका दुई जङ्घा ( तीघ्रा ) कमलका कण्टक भएका दुईटा नाल× ( डाँठ ) जस्तै देखिन्छन् । उहाँका दुई पैतलामा शङ्खचक्र कल्पवृक्ष, ध्वजा, कमल, अङ्कुश र वज्रका चिह्नहरू छन् । महालक्ष्मी, भूदेवी, नीलादेवी इत्यादि देवीहरूले डराएर स्पर्श गरिने योग्य त्यस्ता अत्यन्त कोमल, भक्तहरूका नित्यभोग्य, सबै दुःखनिवर्तक र अत्यन्त तेजोमय उहाँका दुई चरण छन् । ती दुई चरणका अङ्गुलिहरू लावण्यसागरका

टिप्पणी— +नालः—डाँठसमेत फुलेको कमललाई उल्टाएर राख्दा जस्तो देखिन्छ । त्यस्तो भगवाको चरणको शोभा छ । भगवानको चरण कमल जस्तै हो, चरणको माथिल्लो भाग कमलको डाँठ जस्तै हो चरणको गोली गाँठो र घुंडो डाँठको कण्टक जस्तै हुन् । यो पञ्चस्तवीमा श्रीकूरेशस्वामीको अनुभव हो ।



मूल— मनांसि नेत्राणि च स्ववशेकृत्वा कोऽयमितिनजानामि एनं कुत्रग्रामे अपश्यमिति व्यामोहमुत्पादयन्तं सकलजनजीवातुंवैदग्ध्यसर्वस्वं माणिक्यमंजूषिकायां हिरण्यवत्स्थितस्य स्पृहणीयस्य दिव्यात्मस्वरूपस्य प्रकाशकं परस्परोपमर्देनाबाधस्थले प्रवाहवत् सर्वतो भ्रमदाभरणायुधज्योतिर्मध्य उन्नेयं श्यामसुन्दरविग्रहं नित्यसूरीणामनवरतेक्षणान्यप्यसहमानंम्लायमानं

अनु— तरङ्गहरूको श्रेणी जस्तै देखिन्छन् । ती तरङ्गहरूमाथि उदय भएका दशवटा चन्द्रमा जस्तै दशवटा नङ्हरू छन् । भगवानको यस्तो दिव्यविग्रले पुरुषहरूका मनमा स्त्रीभाव पैदा गराउँछन्, शरीर सम्बन्धी आत्मीय स्वजनहरूको सम्बन्ध छुडाई दिन्छन्, त्यस्तै अरु मानिसहरूसंगको द्वेषलाई नाश गर्दछन् ब्रह्मरुद्रादि देवताहरूको उपकारक, वैकुण्ठनिवासीको निमित्त म +मडलग्रहण गरुंला । यस उक्ति अनुसार दर्शन

टिप्पणी— +यो दक्षिण भारतको एक प्राचीन चलन हो । पतिले स्त्रीलाई हेला गर्दा कपाल फिजाएर च्यातेको पुरानो लुगा लाएर टोलमा, घर-घरमा गई स्त्रीले आफ्नो शरीरको हालत सबैलाई देखाएर भन्छे 'हेर्नुहोस् विना अपराध पतिले मलाई यस्तो दुःख दिनु हुन्छ । पछि पतिले थाहा पाउँदा उनलाई लाज हुन्छ र उनी आफ्नो स्त्रीलाई लीं हाल्दछ । यसलाई दक्षिण भारतको भाषामा मडलग्रहण भन्दछन् ।

मूल— सौकुमार्ये श्रीमहालक्ष्म्याः सुन्दरकान्तिमद्दीर्घनेत्रयोर्नित्यंलक्ष्यभूतत्वात् मुकुलं कुसुमंवेति विकल्पनार्हकान्तिप्रवाहस्य कवाटवत् स्थितानि विग्रहार्पितान्यपरिमितान्याभरणानि च नित्यसूरीन् यथेच्छमनुभावयन्तं

अनु— गर्नासाथ समस्त क्लेश नाश गराएर नेत्रमा पुलक ल्याउँछन्, भगवानको समता प्राप्त गर्नु भएका नित्यसूरिहरूका मन र नेत्रलाई आफ्नो वशीभूत गराएर यहाँ को होइबक्सिन्छ त्यो म जान्दिन उहाँ लाई कुन् गाउँमा मैले देखेको थिएँ भन्ने व्यामोह उत्पन्न गराउँछन्, यस प्रकारले भगवानको दिव्यविग्रह समस्त जीवहरूका शरीरमा प्राण ल्याउने दिव्यरसायन औषधी जस्तै हो। यो विग्रह चतुराईको सर्वस्व भएर माणिक्यमय पेटिभित्र राखेको सुवर्ण जस्तै भगवानको निराकार स्पृहणीय दिव्य आत्मस्वरूपको विशदतर प्रकाशक हो तथा वेगसंग परस्परमिलित हुनाले गहिरो ठाउँको नदीको जलप्रवाह जस्तै भगवानका शङ्खचक्र आदि अस्त्रहरू र दिव्यगहनाहरूका परस्पर सम्मिलित भएको तेजभित्र अनुमान गरिन योग्य भगवानको दिव्य श्यामसुन्दर विग्रहछ। नित्यसूरिहरूका अविच्छिन्न दर्शन सहन नहुनाले भगवद्विग्रहको सुकुमारता म्लान भइहान्छ



मूल— तृषितानां मुखे प्रापितां जलधारामिव सकलश्रमनिवारकं शीतलं स्वच्छं सागरस्यामृकनकगिरिद्रववत् तप्तकार्तस्वरभासमानश्यामदिव्यदेहकान्त्या विश्वमाप्याययन्निर्युक्तप्रकारेण सकलजगदाप्याययन्तं सर्वत्र विसृमरदिव्यविग्रहपरिमलेन श्रीवैकुण्ठं सर्वत्र परिमलितं कृत्वा करकपातवत् सर्वं देहकम्पं शीतलया अर्धक्षणं

अनु— जस्तै देखिन्छ भगवद्विग्रह त्यस्तो सुकुमार छ। महालक्ष्मीको सुन्दर कान्तियुक्त दीर्घ दुई नेत्रका सर्वदा लक्ष्य हुनाले यो पुष्प होकि कोपिला हो भन्ने विकल्प गरिन योग्य तथा कान्तिको प्रवाहलाई रोक्न भयाल, ढोका जस्तै भगवद्विग्रहमा अर्पित भएका अरू असंख्य भूषणहरू छन्। नित्यसूरिहरूलाई उहाँहरूका इच्छानुसार अनुभवदिने, तृषा लागेका मानिहरूका मुखमा खनाएको जलधारा जस्तै सबै श्रमनिवारक शीतल स्वच्छ सागरसम्म व्याप्त भएको तथा आगोमा गलाएको हुनाले तरलभएको सुनको पर्वत जस्तै र तताएको स्वर्ण जस्तै प्रकाशवान श्याम दिव्यदेहको कान्तिले विश्वमाप्याययन् यस कथनानुसार समस्त जगतलाई हसगराउने शरीरको सुगन्धले विश्वलाई सुगन्धित गरेर असिनापर्दा समस्तदेहमा कम्पहुने जस्तै शीतल, अर्धक्षणको निमित्त पनि दर्शन

मूल— निवृत्तावपि नित्यमुक्तानेकजलालाभ इव शोषयन्त्या कटाक्षामृतवृष्ट्या दिव्यगोष्ठीं पल्लवितां कृत्वा गाम्भीर्य-माधुर्याद्यनवधिकगुणगणविभूषितैरतिमनोहरदिव्यभाव-गर्भैर्विकसितकुसुमसदृशं श्रीमुखमण्डलं सर्वत्र भासयद्भिर्लीलालापैः सूरीणांहृदयानि प्रीणयन्तं उभयविभूतिमपि आसनबलेनजित्वा स्थितम् ।

❀ इत्यर्चिरादिमार्गे तृतीयं प्रकरणम् । ❀

---

अनु— नपाउँदा अत्यन्त तृपालाग्दा अलिकति पनि जल नपाएर हुने हालत जस्तै नित्यमुक्तहरूका शरीर त्यस्तै सुकाउने जस्तै तैपनि कटाक्षपातरूपी अमृतवृष्टिद्वारा नित्यमुक्तहरूको सम्पूर्ण दिव्यगोष्ठीलाई पल्लवित ( हरियो ) गराएर गाम्भीर्य, माधुर्य आदि असीम गुणसमूहद्वारा विभूषित तथा अतिसुन्दर अनेक भावगर्भ द्वारा विकसित पुष्पसमान भगवानको मुखमण्डल छ । सर्वत्र प्रकाशित गर्ने, लीलापूर्वक मधुरवचनहरूद्वारा वैकुण्ठवासी सूरिहरूका हृदयलाई आनन्दित गर्ने तथा दुवै विभूतिलाई पनि आफ्नू आसनबलले अर्थात् एउटै आसनमा राजभई जितेर स्थितहोइबक्सिन्छ ।

❀ इत्यर्चिरादिमार्गेसानुवादं तृतीय प्रकरणम् । ❀



# अथ चतुर्थप्रकरणम्

मूल— सप्तलोकयामप्येकाज्ञागोचरायांदेवसंघेषु प्रणमत्सु समासीनं श्रीवैकुण्ठनाथं कदा द्रक्ष्यामिनदर्शयसीत्युक्तं दुःखं सर्वं यथानिवर्तेत तथा दृष्टएवहिनः शोकमिति गमनकालिकैतन्मनोरथप्रकारेण नेत्राभ्यां दृष्ट्वा समस्तपरिवारायश्रीमतेनारायणाय नमः इति हर्षपरवशो निपत्योत्थाय महत्या प्रीत्या गत्वा पादपीठे पादं

---

# अथ चतुर्थ प्रकरण

अनु— सप्तलोक अर्थात् सम्पूर्ण ब्रह्माण्ड उनै वैकुण्ठनाथको आज्ञाको अधीनमा छ, समस्त देवसंघ उनै भगवानलाई प्रणाम गर्दछन् । यसै भगवानको दर्शन नपाएको बेलामा मुमुक्षुजीव कहिले भगवानको दर्शन पाउँला, भगवान दर्शन दी बक्सिन्न भनेर दुःखी हुनुहुन्थ्यो । अहिले त्यो दुःख बिलकुल नाशभयो तथा भरतजी चित्रकूट जाँदा 'दाज्युको दर्शन प्राप्त गर्नासाथ हामीहरुको दुःखनाश भइहाल्दछ' भन्ने उहाँको गमनकालिक मनोरथ अनुसार अहिले वैकुण्ठ पुग्नुभएको उनै मुक्तजीवले श्रीवैकुण्ठनाथ भगवानलाई दुई नेत्रले दर्शन गरेर समस्तपरिवारायश्रीमतेनारा-

मूल— निधाय दिव्य सिंहासनमारोहति । सचैनं दृष्ट्वा विगत वाक्यनादराकाशश्चन्द्रमसं पश्यन् समुद्र इव विकृतः स्वविश्लेषकालिक भूशयनजन्यदुःखं यथानिवर्तेत तथा अंके भरतमारोप्य मुदितः परिषस्वजे इत्युक्तप्रकारेण अङ्कमारोप्य भरतमिवाक्रूर मिव चाश्लिष्यप्रीत्या कोऽसीति पृच्छति अयं च अहं ब्रह्मास्मीति राजकुमार इति च वदति । स चैतावत्कालं किमकरोरितिपृच्छति । अयं च चन्दनचर्चितमृदुकुचवनितादीर्घबाहुपरिरम्भणानन्दप्रवाहावगाहमकरवमिति वदति । सच त्वं त्वेन किं फलमवाप्नोरिति पृच्छति । अयं च घोरनरकस्थितिफलमवाप्नवमिति वदति । सचत्वमनन्तरं किमकरोरिति पृच्छति । अयं चागतोऽहमिति वदति । स त्वदागमनकारणं किमिति पृच्छति । अयं पुण्यमेवेति वदति । स त्वमागत्य किमकरोरिति पृच्छति स त्वां प्राप्नवमिति वदति । स मां प्राप्य त्वं किं प्रयोजनमलभथा इति पृच्छति । अयं ममक्रूरदुःखनिवृत्तिप्रयोजनमलभे इति वदति । कृतफलितं श्रीमान् सन् अनव-

अनु— यणाय नमः भनेर हर्षको परवशमई भूईमा गिरेर फेरि उठेर आनन्द पराकाष्ठाले श्रीवैकुण्ठनाथ भगवानको नजीक जानु हुन्छ । त्यसपछि भगवानको चरणारूने पादपीठमाथि आफ्नो पाउ राखि



मूल— धिकानन्ददेशे स्थितिमप्राप्य नास्ति सुखमित्युक्तेक्रूरलोके चिरं क्लेशं प्राप्तवान् खलुगुणेष्वनवाप्य बहुमाथामयानेकयोनिषु जातः दुःखं प्राप्तवान् निःसीमानन्दमप्राप्य दीर्घभुजपरिरम्भणानन्दप्रवाहे निमज्य नित्यं दुःरुयसि । तच्च दोष इति मत्वा मामाश्रित्य

अनु— भगवानको दिव्यसिंहासनमा उक्लिनु हुन्छ । यद्यपि वेदले भगवानलाई अवाक्यनादरः भनेको छ अर्थात् भगवान महामणिमण्डपमा कसैसंग कुरा गरी बक्सिन्न र कोही प्रति उहाँको आदर छैन तथापि पूर्णिमा आदि पर्वदिनमा चन्द्रमालाई देखेर समुद्र जस्तो वृद्धिप्राप्त हुन्छ त्यस्तै वैकुण्ठनाथ भगवानले पनि उनै मुक्तजीवलाई देखेर आफ्नो गाम्भीर्य छोडी बक्सिन्छ । श्रीरामचन्द्र भगवानदेखि चौदहवर्ष विछोड भई भरतजी भूईमा शयनगर्दा उहाँको सबै दुःख चौदहवर्ष पछि भगवानको राज्याभिषेक भएपछि जस्तो नाशभएको थियो र भगवान पनि अत्यन्त आनन्दितभई भरतलाई काखमा राखि अङ्कमाल गरीबक्स्यो । रामायणको यस कथनानुसार तथा कृष्ण भगवानले जस्तो अक्रूरलाई अङ्कमाल गरीबक्स्यो त्यस्तै श्रीवैकुण्ठनाथ भगवानले पनि उनै मुक्तजीवलाई अङ्कमालगरेर प्रीतिपूर्वक सोधिबक्सिन्छ तिमी को होउ । मुक्तजीव

मूल — मां द्रष्टुमाशां यदाकरोस्तदैवागत्यमुखं नादर्शयम् । आकाशं दृष्ट्वा रोदिमि प्रणमामि इत्युक्तप्रकारेण अस्मदावासभूतमाकाशं दृष्ट्वा रोदनं प्रणामं च कृत्वा आह्वानकालोऽ द्यापिन ह्रस्वीभवति इतः परं कदाहं त्वां प्राप्नुयाम् इतियथात्वं दुःखं प्राप्नुयास्तथाहं 'विलम्बि-

अनु— भन्नु हुन्छ म राजकुमार हुँ, म ब्रह्म हूँ। भगवान सोधिबक्सिन्छ यतिको दिन तिमीले के गऱ्यौ। मुक्तजीव भन्नु हुन्छ श्रीखण्डको लेप लागेको कमलो स्तन भएकी स्त्रीको लामो बाहुको आलिङ्गनबाट उत्पन्न भएको आनन्द प्रवाहमा डुबेको थिएँ। भगवान सोधिबक्सिन्छ त्यसबाट तिमीले के फल पायौ। मुक्तजीव भन्नु हुन्छ घोरनरकमा बस्नु पऱ्यो यही फल पाएँ। भगवान भनिबक्सिन्छ त्यसपछि तिमीले के गऱ्यौ। मुक्तजीव भन्नु हुन्छ यहाँ आएर मैले हजुरको चरण पाएँ। भगवान सोधिबक्सिन्छ मलाई पाएर तिम्रो कुन् प्रयोजन सिद्ध भयो। जीव भन्नु हुन्छ मेरो क्रूर दुःखनिवृत्त भयो मेरो यही प्रयोजन सिद्ध भयो। भगवान सोधिबक्सिन्छ तिम्रो यहाँ आगमनको कारण के हो। जीव भन्नु हुन्छ पुण्य कारण हो। भगवान भनिबक्सिन्छ मेरो कार्य सफल भयो श्रीमान भएर असीम आनन्दमय देशमा बस्न



मूल— तवात्र । दुःखसागरं प्रविश्य वैकुण्ठाख्याद्वितीयनावोऽ-लाभात् भ्रमामीति क्लेशितस्त्वं ततो निर्गत्यकूलं प्राप्य तव महान्तौ चरणौ प्राप्य कदा स्थास्यामीत्युक्तं दुःखं यथा निवर्तेत तथा मां प्राप्तवान् अतः विशुष्य विशु-ष्येत्युक्तप्रकारेण तापनिवृत्तिर्यथास्यात्तथा मिलित्वा

अनु— नपाएर सुख छैंदैछैन यस कथनानुसार क्रूरलोकमा धेरै दिनदेखि क्लेश पायौ, मेरा गुणहरूका अनुभवमा नडुबेर मायामय अनेक योनिमा जन्मेर दुःख पायौ। असीम आनन्द नपाएर ( आइमाईको ) बाहुको आलिङ्गनको आनन्द प्रवाहमा बगेर सदा दुःखी थियौ यसलाई अनुचित संझेर मेरो शरण परेर जुनदिन तिमीले मेरो दर्शनको आशा गऱ्यौ मैले त्यसै बखत आएर तिमीलाई मुख देखाएको छैन। आकाश हेरेर रुन्छु, प्रणाम गर्छु श्रीशठकोप आल्वारको यसउक्ति अनुसार मेरो वासस्थान वैकुण्ठ माथि छ भन्ने संझी आकाश-लाई हेरेर रोई प्रणाम गरी मलाई बोलाउने समय नजिक आउँदैन, अब हजुरलाई म कहिले पाउँला यस प्रकारले मेरो दर्शनको निमित्त तिमी दुःख पाउ भन्ने विचारले मैले ढिलो गरें। दुःखसागरमा डुबेर वैकुण्ठ नामक अद्वितीय नाउ नपाएर यहीं घुमीरहनु पर्दछ त्यस्तो दुःख मैले तिमीलाई दिएँ। दुःखसागर-

मूल— शीतलोऽभूः। अस्माकं सृष्ट्यादिव्यापराः सफला अभूवन् प्रणष्टस्य यथालाभ इत्युक्तप्रकारेणास्माकमलभ्यलाभो जातः त्वदागमनेनायं देशः सनाथोऽभूत्। एतद्गोष्ठ्यांनायकरत्नवत्स्थितस्त्वमासत्यौज्ज्वल्यमापादयः क्रान्तचरणौ खिन्नौ किमिति मनोहरैश्चाटुभिरार्द्रयन्मुदा

---

अनु— बाट निस्केर यसका छेउमा आएर हजुरको दुई महान चरण प्राप्त गरीहुने त्यस्तो मेरो स्थिति कहिले होला। एवं प्रकार तिम्रो सबै दुःख निवृत्ति हुने किसिमले तिमीले मलाई पायौ। विशुष्य-विशुष्य यस कथनानुसार तिम्रो सबै तापनिवृत्ति होस् त्यस्तै मसंग मिलेर तिमी शीतल भयौ हामीले अनादिकालदेखि गरिएका सृष्टि पालन इत्यादि हाम्रा कार्यहरू अहिले सफल भए। 'प्रनष्टस्य यथालाभः' यसकथनानुसार हामीहरूलाई अलभ्यलाभ भयो। तिमी यहाँ आउँदा हाम्रो यो देश सनाथ भयो। यहाँ आएर हाम्रो गोष्ठीको नायकरत्न भएर यहीं रहेर यस गोष्ठीलाई उज्ज्वल गर। यहाँसम्म आएकोले तिम्रो दुई पाउ दुखेकि। यस प्रकारले मनोहर चाटुवचन बोलेर आनन्दले सबैका मनलाई आर्द्र गरी श्रीरामायणको यसउक्ति अनुसार वन्दिहरू जस्तो राजाको स्तुति गर्दछन् त्यस्तै श्रीवैकुण्ठनाथ भगवान उनै मुक्तजीवको



मूल— इत्युक्तप्रकारेण वन्दिवत्स्तुत्वा ओघमेघस्वरेण मयूरवदाह्लादयन्तंकृत्वा सकलदुःखमूलशरीरसम्बन्धेन चिरकालंदुःखमनुभूय भिषजं महामणिवर्णमाश्रित्यविनष्टसकलदुःखंकृपानिमग्नमिमंगतरुजं स्नातंपुत्रंपितेव च मायकृतश्चित्यत्र जीवनं सुरिणामिव लोचनाभ्यां पिबन्नि-

---

अनु— स्तुति गरी मेघले गर्जन गरेर मयूरलाई आनन्दित गराउनु जस्तै भगवानले उनलाइ आह्लादित गराएर सबै दुःखहरूको मूलकारण शरीर सम्बन्धले गर्दा अनादिकालदेखि दुःख अनुभव गरी अहिले नीलमणि भगवानरूपी वैद्यको आश्रय गर्दा उनै मुक्तजीवको सबै दुःख नाशभइ हाल्दछ। अघि दुःखसागरमा डुबेको जीव अहिले भगवानको दयासागरमा डुब्दछ। विरामी पुत्रले आरोग्य स्नान गर्दा त्यसलाई हर्ष र स्नेहपूर्ण दृष्टिले हेर्ने पिता जस्तै, श्रीशठकोप आल्वारलाई भगवानले जस्तो हेरिबक्स्यो, विभीषण शरण पर्दा श्रीरामचन्द्र भगवानले उहाँलाई जस्तो हेरिबक्स्यो त्यस्तै श्रीवैकुण्ठनाथ भगवानले आफ्नो कमल जस्तै सुन्दर दुई नेत्रद्वारा उनै मुक्तजीवलाई हेरेर उनका अनादिकालदेखि अनुभूत भएका सबै दुःखहरू नाशगरी बक्सन्छ। विकसित नीलकमलको पोखरी अथवा विकसित पुण्डरीक भन्ने कमल जस्तै आफ्नो

मूल— वेति श्रीविभीषणं पश्यन् चक्रवर्तितनय इव च मां न पश्यसि इत्युक्तंदुःखं यथा निवर्तेत तथा कमलनयनाभ्यां दृष्ट्वा निवृत्तचिरकालानुभूतदुःखं निरन्तरं विकसन्मृदुकालकमलतटाकसदृशेदीर्घनयने विकसत्पुण्डरीके एतस्मिन्ननन्यगोचरं निधाय पार्श्वावलोकनमजानन् तापेतं दशके परकालसूरिमनोरथवत् आरावमदु इम्बुपयक

---

अनु— दुई दीर्घनयनले उनै मुक्तजीवलाई हेर्दा उनलाई मात्र हेरुं भन्ने इच्छाले प्रभु आफ्नो दाजा–वाजा कहीं पनि दृष्टि दीबक्सिन्न। भगवान तापेतं दशकमा जस्तो श्रीपराकालसूरिको र आरावमदु भन्ने र इम्बुपयक्क भन्ने दुई दशकमा जस्तो श्रीशठकोपसूरिको सबै मनोरथ पूरा गरी बक्स्यो त्यस्तै श्रीवैकुण्ठनाथ भगवान अहिले उनै मुक्तजीवको सबै मनोरथ पूरा गरी बक्सिन्छ। हजुरको रूपको दर्शन दी अदृश्य होइबक्स्यो यसउक्ति अनुसार श्रीशठकोप आल्वारको दुःख यस नवीन मुक्तजीवलाई नहोस्। त्यस कारण तथा विभ्रुणुतेतनूं स्वाम्– आफ्नो दिव्यविग्रहको साक्षात् दर्शन दीबक्सिन्छ उपनिषदको यसउक्ति अनुसार भगवानले आफ्नो अनन्त तेजोमय रूपको दर्शन दिएर उनै मुक्तजीवलाई आलिङ्गन गरी यो मेरो चित्त भ्रम होकि सीताजीको यस कथनानुसार



मूल — इत्यनयोः पराङ्कुशसूरिमनोरथवच्चैतन्मनोरथान् सर्वान् पूरयित्वा रूपम्प्रदर्श्य अन्तर्हितोऽसीयुक्तंदुःखं यथानिवर्तेत तथा विभ्रुणुतेतनूं स्वाम् इत्युक्तप्रकारेणदीप्यमानं रूपंदर्शयित्वा संश्लिष्य किंनुस्याच्चित्तमोहोऽयमित्युक्तप्रकारेण निरतिशयव्यामोहंकृत्वा श्रीमहालक्ष्म्या हस्ते

---

अनु — उनै मुक्तजीव प्रति आफ्नो अत्यन्त +व्यामोह देखाएर उनलाई महालक्ष्मीको हातमा दी बक्सिन्छ। कंसवध भएपछि देवकी आमाले जस्तो आनन्द र स्नेहपूर्ण दृष्टिले कृष्णलाई हेर्नुभयो त्यस्तै महालक्ष्मीले उनै मुक्तजीवलाई अङ्कमाल गरी दुवै विभूतिको ऐश्वर्य उनलाई दीबक्सिन्छ। त्यस बखत स्नेहले उहाँको स्तनबाट दुधको धाराले मुक्तजीवको सर्वाङ्ग भिज्दछ। यस प्रकारले मुक्तजीव महालक्ष्मीको कृपापात्र भएर उहाँको काखबाट उठेर 'हजुरको पीताम्बर श्रीमुख रातो बिम्बाधर केशपाशको दर्शन गरेर' यस कथनानुसार श्रीवैकुण्ठनाथको सामने उभिएर दर्शन गर्न अशक्य हुनाले मुक्तजीव भगवानको छेउमा गएर

---

टिप्पणी— +व्यामोह कोही नयाँ भक्त पाएपछि यसको निमित्त म के गरूं, के गरूं भन्ने भगवान मुग्ध होइबक्सिन्छ। त्यस कारण श्रीगोदादेवीले भगवानको व्यामोह भन्ने एउटा नयाँ प्यारो नाम राख्नुभयो।

मूल — अर्पयति। सा च कंसवधानन्तरं कृष्णं पश्यन्ती देवकीव स्वतःस्रवत्स्तन्यसिक्तसर्वावयवं परिष्वज्योभयविभूत्यैश्वर्यमपि ददाति। पश्चाल्लयानुगृहीतोऽङ्कादुत्थाय पीताम्बरं श्रीमुखं रक्तबिम्बाधरं केशपाशं च दृष्ट्वा इत्युक्तप्रकारेण पुरतः स्थित्वा अनुभवस्य दुःशकत्वात् पार्श्वभागं प्राप्य तत्सौन्दर्यमनुभूय तस्य किञ्चिदन्तरं विना अनुकरणे धारणाशक्तेः पश्चाद्गत्वा तत्सौन्दर्यमनुभूय पूर्वाङ्गादधिकापराङ्गकलहमिति ततः पुरतः सौन्दर्यस्यैव भोग्यत्वात् पुरतः गत्वा सौन्दर्यतरङ्गताडनतरलितचित्तवृत्तिरुत्तंसिताञ्जलिः सर्वतो भ्रमन् भ्रमद्भ्रमर-

---

अनु— उहाँको पार्श्वभागको सौन्दर्यको अनुभव गर्नु हुन्छ। सन्मुखभाग र पार्श्वभागको सौन्दर्यमा उहाँले केही अन्तर देख्नु भएन। आफूलाई सम्हाल्न नसकेर उहाँ भगवानको पश्चाद्भागमा गएर अनुभव गर्नु हुन्छ। सन्मुखभागको सौन्दर्य र पश्चाद्भागको सौन्दर्य म उत्तम हूँ— भन्ने परस्पर कलह गर्दछन् जस्तो उहाँको मनमा पर्दछ। सन्मुखभागको सौन्दर्यलाई अधिक भोग्य सम्झेर मुक्तजीव फेरि वैकुण्ठनाथ भगवानको सामने आउनु हुन्छ। यस प्रकारले सौन्दर्यतरङ्गको ताडनाद्वारा मुक्तजीवको चित्तवृत्ति अत्यन्त चञ्चल हुनाले उहाँ हात जोडेर भगवानको वरिपरि घुम्नु



मूल — तुलसीकुसुममालाविग्रहः चन्दनालङ्कार इत्येतत्प्रकारमहं कथं कथयामि कमलनयने भुजाधर अतिसुन्दराकारोऽयमित्यादिप्रकारेण विस्मितहृदयः अन्दामसत्तन्वमुडिज्योतिप्रभृतिषु श्रीपरांकुशवत् स्वलाभजप्रीतिजन्यकान्तिमनुभूय 'यत्रनान्यत् पश्यति' इत्युक्तप्रकारेण अनन्यगोचरमना हावु हावु हावु अहमन्नमहन्नमहमन्नं

---

अनु— हुन्छ। जसको नजिक भ्रमराहरू उड्दछन् आफ्नो शरीरमा त्यस्तो तुलसीमञ्जरीको माला धारण गर्ने, भगवानको शरीरमा श्रीखण्डको लेप छ। भगवानको यस प्रकार वर्णन म कसरी गरुँला, भगवानका नेत्र कमल जस्तै सुन्दर छन्, उहाँका बाहु अधर तथा आकार कस्ता सुन्दर छन् यस प्रकारले उनै मुक्तजीवको हृदय विस्मयले भर्दछ। अन्दामसत्तन्वमुडिज्योति प्रभृति गाथाहरूमा श्रीशठकोपस्वामीको जस्तो हालतको वर्णन छ त्यस्तै उनै मुक्तजीवलाई पाएर भगवानलाई भएको प्रीतिबाट उत्पन्न अधिकतरकान्ति मुक्तजीवले अनुभव गरेर 'जसको दर्शन गरेर अरू कुनै विषयको दर्शन गरिँदैन' उपनिषदको यसउक्ति अनुसार सबै विषयान्तरबाट मुक्तजीवको मन हटेर भगवानमै एकाग्र हुन्छ र हावु हावु हावु अहमन्नमहमन्नमहमन्नम् इत्यादि सामगान गरेर लक्ष्मीसमेत हजुरको दर्शन पाएर यस

मूल — पद्मालयया सह दासोऽहं दृष्ट्वा निवृत्तदुःखोऽस्मि कान्तिमदुज्ज्वलयां त्वां दृष्ट्वा चतुर्यमपश्यम् प्राप्तुं तव चरणौ अनुमान्य मां त्वच्चरणौ प्रापयन् स्वामिन् जनित्वामृत्वा च भ्रमतो मम दैन्यं निवृत्तमिति प्रीतिसाध्यार्थे वाचा सम्यक् स्तौति । श्रीवैकुण्ठनाथश्चैनं परमाकाशव्याप्तशीतलदृष्टिभ्यां दृष्ट्वा सस्मितं स्निग्धगम्भीरम-

---

अनु— दासका सबै दुःखहरू नाश भए, तेजिलो कङ्कण धारण गर्ने महालक्ष्मी र हजुरका दर्शन पाएर हजुरको चतुराइ थाहा पाएँ, हजुरका दुई चरण पाएँ, हजुरले बहुमान गरेर आफ्नो दुई चरण मलाई दिंदा हे स्वामिन् जन्म–मृत्युरूपी संसारचक्रमा घुमेर उत्पन्न भएको मेरो दीनभाव नाश भएको छ । यस प्रकारले आनन्दमा लवलीन उनै मुक्तजीव वचनले भगवानको स्तुति गर्नु हुन्छ । तब वैकुण्ठनाथ भगवान परमाकाश नामक वैकुण्ठमा व्याप्त आफ्नो शीतल दृष्टिले उनै मुक्तजीवलाई हेरेर मन्दहास्ययुक्त स्निग्ध गम्भीर मधुर वचनले उहाँलाई नजीक बोलाई हजुरको दुई चरण मेरो शिरमा राखिबक्सियोस् भन्ने मुक्तजीवको कामना अनुसार लक्ष्मीद्वारा सेवित कमलसदृश आफ्ना दुई सुन्दरचरण उहाँको शिरमा राखि शिरको शोभा वृद्धि गरी बक्सिन्छ । त्यहाँदेखि भगवानले उनै



मूल — धुरया वाचा समीपमाहूय तव रक्तमहापादौ मम मस्तकं प्राप्येन्येतदपेक्षाप्रकारेण पद्मालयया समूह्यमानाभ्यां कमलसदृशचरणाभ्यामुत्तमाङ्गमलङ्कृत्य स्वचरणयोरधस्तान्निवेश्य नित्यकैङ्कर्ये नियुंक्ते अयं च भक्तिमेव कृत्वा सदा प्रणम्य सकलविधकैङ्कर्यं कर्तुं प्रार्थयमान इत्युक्तप्रकारेण अभिनिवेशातिशयेन नानादेहान् परिगृह्य अशेषशेषवृत्तिष्वन्वितोऽस्थानरक्षान्यसनिभिः

---

अनु— मुक्तजीवलाई आफ्नो चरणप्रान्तमा राखेर उहाँलाई आफ्नो नित्यकैङ्कर्यमा नियुक्त गरीबक्सिन्छ । उनै मुक्तजीव श्रीवैकुण्ठनाथ भगवानको भक्ति गर्दै उहाँलाई सधैं प्रणाम गरी 'सर्वप्रकार कैङ्कर्य गर्न प्रार्थना गरेको' यस उक्ति अनुसार अत्यन्त अभिनिवेशले गर्दा नानाप्रकारका शरीरधारण गरेर समस्त सेवा कार्यमा तत्पर भई भयरहित स्थानमा पनि प्रेमको पराकाष्ठाले भगवानको कोमल शरीरमा केही अमङ्गल नहोस् भन्ने विचारले उहाँको रक्षामा निरन्तर रहने नित्य र मुक्तजीवहरूसंग सर्वत्र रहेर भगवानको मङ्गलाशासन गर्दै 'भ्रमरि भएको तेजः प्रवाहमा आनन्द अनुभव गरेर स्थित हुनुहुन्छ' यस कथनानुसार आनन्दरूपी अमृतसागरभित्र सर्वाङ्ग सहित निमग्न भएर अनन्तकालसम्म वैकुण्ठमा रहनु हुन्छ । 'न च पुनरावर्तते न च

मूल — सूरिभिः सह सर्वतःस्थित्वा मङ्गलाशासनं कुर्वन् सावर्ते प्रवहच्चेजःप्रवाहे आनन्दं प्राप्यस्थितः इत्युक्तप्रकारेण अमृतसागरान्तर्निमग्नसर्वावयवो यावत्कालं तिष्ठति ।

❀ इत्यर्चिरादिमार्गे चतुर्थं प्रकरणम् । ❀

---

अनु — पुनरावर्तते' वेदान्तमा श्रीवेदव्यासको यसउक्ति अनुसार उनै मुक्तजीव कहिल्यै लीलाविभूति संसारमण्डलमा आएर बद्ध हुनुहुन्न ।

❀ इत्यर्चिरादिमार्गेसानुवादं चतुर्थं प्रकरणम् । ❀

